: : जयतु श्री सरस्वती माता : :

नमो ब्रह्मण्यदेवाय गोब्राह्मणहिताय च ।
जगद्धिताय कृष्णाय गोविन्दाय नमो नमः ॥

# गुण–रत्नमाला



लेखक औ प्रकाशक :-

## पं० श्री जगन्नाथ उपाध्याय

गुरागाञ्जी



तृतीयबार २०००] सम्वत् २००८ [मोल १२-००





# गुण- रत्न माला

## चर्पट मञ्जारी

भज नारायण ! भज नारायण ! भज नारायण ! सज्ज न हो !
मर्नु छ निश्च य भोलि कि पर्सी यहि छ सहारा उस दिनको ॥

क्षण पल घरि दिन रात बिहाना,
घरि घरि नाम र भेष बिराना ।
काल जमाउँछ खेल तमाशा,
आयु घटे, तर घट्तिन 'आशा' ॥1॥ भज नारा०

देह छ नाङ्गो कपडा छैनन्,
अँजुली बाहिक भाँडा छैनन् ।
भिख गरि खान्छन् रुखमनि बस्छन्,
तर पनि आशैतिर मन लान्छन् ॥2॥ भज नारा०

जब तक धनको लाउँछ धारो,
तब तक सबले मान्छ पियारो ।

वृद्ध हुँदा जब बल टुटि जाला,
बन्ला घरमै सबको हाला ॥3॥ भज नारा०

कति मुडिंदै छन् कति रँगिदै छन्,
कति लट्टादका प्रेमि हुँदै छन् ।
तर छन् 'ज्ञान बिना' सब अन्धा,
भुँडिमै ठिक्क छ सबको धन्धा ॥4॥ भज नारा०

गीता अलिकति जो पढि लिन्छन्,
अलिकति गङ्गाजजल निलि लिन्छन् ।
प्रभुको पूजन जो जन गर्नन्,
किन ती यमका वशमा पर्नन् ॥5॥ भज नारा०

देह विचारा गलिगो सारा,
लौरो भो पर सर्न सहारा ।
केश फुलेका दाँत झरेका,
सब छन् आशै तर्फ गिरेका ॥6॥ भज नारा०

खेल्दै बितिगो बाल्य अवस्था,
तरुणी तिर गो तरुणाऽवस्था ।

वृद्ध भएपछि चिन्ता लेला,
हरिकन भजने कुन हो बेला ॥7॥ भज नारा०

अनि पनि जन्मनु अनि पनि मर्नु,
अनि पनि गर्भै तिर गै गर्नु ।
अब ता प्रभुजी पार लगाऊ,
यो भवसागरबाट उठाऊ ॥8॥ भज नारा०

अनि उहि दिउँसो रात र हप्ता,
पक्ष र तिथि ऋतु वार घुमन्ता ।
मैह्ना अयन र वर्ष उनै छन्,
आयु कतर्ने कैचि यिनै हुन् ॥9॥ भज नारा०

यौवन सकिंदा काम छ ठट्टान,
पानि सुकेपछि पोखरि झुट्टा ।
धन सकियो त जहान बिराना,
तत्व बुझेपछि संसार छ टुना ॥10॥ भज नारा०

हित मित सुत जन तन धन नारी,
गोठ र खेत पशू घर बारी ।

सब यी जहिँका तहिँ रहने छन्,
तिमिकन यमले खैँची लिनेछन् ॥11॥ भज नारा०

कसले जगमा मकन पठायो,
कति दिन बाँच्नुठ छ जानु कता हो ?
मनमा गुन यति बात गहीरो,
यो सब चक्चकि स्वप्नि सरी हो ॥12॥ भज नारा०

विष्णु सहस्र र गीता गाऊ,
प्रभुका पदमा ध्यान लगाऊ ।
सज्जन सङ्गति तिर मन देऊ,
दुःखी जनको दुःख हरिलेऊ ॥13॥ भज नारा०

जब तक मनमा प्राण रहन्छन्,
तब तक घरमा सोधनि गर्छन् ।
प्राण गएपछि पत्नीग डर्छे,
थर्थरी काम्दै पर पर सर्छे ॥14॥ भज नारा०

चञ्चणल मनका वेग थमाऊ,
नश्वणर सुखमा फस्नम नजाऊ ।

काम र क्रोध लोभ हटाऊ,
ज्ञान र भक्ति विराग बढाऊ ॥15॥ भज नारा०

सुखका खातिर भोग गरिन्छन्,
भोग पछी पछि रोग भरिन्छन् ।
न त गरि खान्छन् न त मरि जान्छन्,
तर पनि पापैतिर मन लान्छन् ॥16॥ भज नारा०

गङ्गा-सागर काशी घुम्छन्,
स्ना ान र दान व्रत कति गर्छन् ।
ज्ञान विना सय जन्म गुजारुन्,
मुक्ति हुँदैन र बुद्धि सपारुन् ॥17॥ भज नारा०

## दशावतार स्तुति

माछो कूर्म बँदेल बाघ बनिंदै कैले मगन्ते हुँदै,
क्रोधी जङ्गलि चोर झैँ र कहिँ ता योगी खुनी झैँ हुँदै ।
नाना रूप लिंदै, कलङ्क सहँदै भै-भार हर्दा छँदा,
हाम्रा यै मनभित्र नै बसिरहुन् श्रीशेषशायी सदा ॥

कैल्यै दुःख कतै नहोस्, सबले राम्रो सुबाटो लिउन्,
बाँचुञ्जेःल सुखी रहेर पछिता द्यौता सरी भै रहुन् ।
भन्नेत्र चिन्तन ली, रमा र निजको वैकुण्थ छोडीकन,
नाना दुःख उठाउने प्रभुजीमा लागोस हाम्रो मन ॥

## मनुष्य-जन्म

डुब्दै गर्भ र कुम्भिपाकहरुमा हर्दम् उभिण्डा मुख ।
भोग्दै कीट-पतङ्ग-पक्षि-पशुका चौरासी लाखौं दुःख ॥
ऐल्हे बल्ल मनुष्य भैकन यहाँ जन्मी रहेछौं हरे !
यस बेला पुरुषार्थ केहि नगरे पर्नेछ धोका भरे ॥

## ॥ यस शरीरले जे चितायो सो पाइन्छ ॥

श्रीनारायणको दया हुन नगै, सत्पुण्य धेरै नभै,
यस्तो मानिस देह यो जगतमा पाइन्नछ भाग्य नभै ।
श्रीचिन्तामणि झैं र  कल्पतरु झैं श्रीकामदा धेनु झैं,
मन्पर्दा सुख हातलाउन पनी सक्नेकछ यसले सधैं ॥

## ॥ हाम्रा इन्द्रियहरुमा विचित्र शक्ति छन् ॥

जिभ्रो कान र नाक लोचन त्वचा छन् पाँच बुद्धीन्द्रिय,
बोली हात र पाउ आदि यसमा छन् पाँच कर्मेन्द्रिय ।
जे-जे चित्त चिताउँछ प्रिय कुरा सो-सो तुरुन्तै पुरा,
गर्दैछन् सब यी दशेन्द्रिय भने क्या हो नपुग्दो कुरा ॥

## ॥ ऐश्वर्यको मूल पुरुषार्थ हो ॥

कर्मैले गतिला, चलाख, रसिला छन् आज मानी धनी ।
योगी, सिद्ध सिपालु, शूर पनि छन् ती वीर नामी गुणी ॥
कर्मैले सुरा ज इन्द्र बनिए द्यौता बने कर्मले ।
सारालोक समाल्न शक्ति, झरिला कर्मै गर्दिंदा मिले ॥

## ॥ हाम्रा पुर्खा ॥

मन्धाता र भगीरथ, ध्रुव, नल, प्रह्ला,द, कुन्तीसुत ।
विश्वाामित्र, वसिष्ठ, लोमश, मनु, श्रीशन्तनू कश्यप ॥
कालीदास, अशोक, भोज, तुलसीदास प्रतापादिक ।
कर्मैले अझ ती अजम्मरि सरी छन् नामले जीवित ॥

## ॥ उनका जति सामग्री हामीसित पनि छन् ॥

नौ मैह्नातक हामीझैं उनि पनी त्यै गर्भ भित्रै थिए,
हामी झैं कलिका रुँदै धुरु-धुरु यै भूमिमा जन्मिए ।
हाम्रो झैं उनको शरीर पनि हो उत्ती थिए इन्द्रिय,
राम्रा कर्म गरेर किन्तु उनले पाए अनन्त श्रिय ॥

## ॥ उनको र हाम्रो समय पनि  एक समान हो ॥

यस्तै थे उदयास्त घाम जूनको यस्तै तिथी वार थे ।
यस्तै साँझ बिहान रात दिन थे मैह्ना ऋतु  वर्ष थे ॥
निद्रा भोक तृषा यसै किसिमका पैले पनि लाग्दथे ।
यस्तै भित्र रहेर नै उनिहरु विद्वान् गुणी बन्दथे ॥

## ॥ उनलाई पनि खानु- लाउनु हाम्रो झैं पर्थ्यो ॥

जाडो घाम झरी बतास र हिलो धूलाहरुका पिर ।
निद्रा भोक तृषा सबै दुःख सहे सत्कर्मका खातिर ॥
तीभन्दा दुःख हामीलाई पनि छन् छौं सर्वदा व्याकुल ।
केले हो उनका सरी तर हरे ! पायौंन राम्रो फल ॥

## ॥ उनका गुण ॥

विद्या भक्ति कला र शील शिपमा आजन्म संलग्नु थे ।
ज्ञान, क्रोध र लोभ, मोह मदका अत्यन्त ती दूर थे ॥
धीरै थे सब वीर थे निपुण थे श्रद्धालु थे शूर थे ।

## ॥ ती गुण सिके हामी पनि उस्तै हुन सक्ने छौँ ॥

नाति हौँ उनका उसै रगतले तैयार हामी भयौँ ।
पुर्खाकि कुल शील थाम्ने उनकै सत्पुत्र भै जन्मियौँ ॥
उत्रै शक्ति छ हामीमा पनि सखे ! उद्यम् गरेनौँ तर,
विद्या शील कला र धर्म गुणले खाली भयौँ हे हर !

## ~अट्ठालइस विद्याको महिमा~

विद्या यै नरको छ रूप भरिलो यै सम्झ गुप्ती धन,
विद्याले सुखभोग मिल्छ सहजै सुध्रिन्छ भित्री मन ।
विद्या हो परिवेशमा हित सखा दर्बारमा पूजिने,

यस्तो उद्यम रत्न  लौ बटुल है ! पैसै बिना पाइने ॥

राम्रो पार्छ न हारले मुकूटले न स्ना ैनले फूलले,
न श्रीखण्ड सुगन्ध मालिश टिका साबून काकूलले ।
साहै सुन्दर बन्नु पर्दछ भने बोली सिकौं संस्कृत,
विद्याले बढिजान्छ रुप सजिलै मिल्ला ठूलो इज्जत ॥

बाजूबन्द किरीट कुण्डल मणि औंठी चुरा हारले ।
भोटो कोट कमीज टोपी पगडी बास्कोट सुर्वालले ॥
सारा देह सजाइ झल्-झल हुँदै जान्छौ सभामा जब ।
बोलेनौ रसिलो उहाँ बसि भने व्यर्थै हुने हो सब ॥

पैर्हु न् हार किरीट कुण्डल मणि औंठी र सिक्री चुरा ।
लाउन् कोट र बूट टोप लहँगा बूटा भरेका पुरा ॥
पाली केश लिइ छडी घडी भिरी कस्तै घसुन् अत्तर ।
बोल्ने ढङ्ग नभै सभा बिच हरे ! के भो र नी सुन्दर ॥

विद्या सुन्न भनेर कान बनिए के गर्नु ती कुण्डल ?
दानै गर्न भनेर हात बनिए, बाला भिरी के फल !
जिब्रो पढ्न र मन्त्र जप्न बनियो, न स्वादका खातिर ।

यो चोला उपकार गर्न बनियो, श्रृङ्गारमा के छ र ?

अनौठो यो विद्या धन छ जगतैमा नमिलने ।
दिँदा बढ्दै जाने कहिँ पनि न बाँडे घटि हुने ॥
पछी नाना जन्मान्तर तक पनी साथ रहने ।
अझै यस्तो दीघो धन किन छिटै हात नलिने ?

विपदमा हुनु धीर न आत्तिनु,
सुख हुँदा सब माथि दया लिनु ।
गनिनु बोल्न सिपालु सभा बिच,
सुजन बन्नु परे यति चिह्न छ ॥

अल्छ्याई नलिनु उँघी नरहनु निद्रा न धेरै लिनू ।
क्वै देखी नडराउनू रिस कतै कैल्यै नउठ्ने हुनू ॥
धन्दा झट्पट छिन्नु फूर्ति रहनू जुम्सोपना छाड्दिनु ।
विद्यामा धनमा पूरा हुनु परे यो बानि हर्दम् लिनू ॥

## आलस्यका दोष

हे आलस्य ! तँ कप्टि झट्टन पर जा लौ निस्किजा मण्टिजा,

ट्याक्कै टिक्न म दिन्न यो शरीरमा, जो काट्नु काटिस् मजा ।
मैले बल्ल चिन्हैं तँलाई, तँ बडो लेथ्रो रछस् दुर्जन !
तैँले गर्नु गरिस् सबै बल हरिस् सारा बिगारिस् गुण ॥

हे लुम्रा ! अघि पढ्नमा लहसिँदा साह्रै थकेथैं र पो,
मैन्हा भर बसि मेट् थकाइ त भनी मञ्जुर दिएँ टिक्न पो ।
तैँले ता बबुरा ! सुटुक्क मन यो आफूतिरै तानिछस्,
एकै मास् भरिमा खुसु खुसु ठूला षड्यन्त्र पो गाँथिछस् ॥

पैल्हे ता मन यो थियो सुरसिलो आँटि छिटो नीडर,
तेरै सङ्गतिमा परेर अब भो लोते लुते काँतर ।
पैले काम बडा- बडा कठिनका थाल्थ्यो र गर्थ्यो पुरा,
ऐल्हे थाल्नु त के चिताउन पनि सक्तैन सानै कुरा ॥

पैल्हे भाँग, बिडी, तमाखु, मदिरा, गाँजा, चिया, चूरट,
चूना- सुर्ती, अफीम, पान यिनको राख्दैनथ्यो लट्पट ।
हर्दम अम्मलमै छ मस्त अब ता छाड्दैन एकै छिन,
ए आलस्य लुठा ! तँ पाजिसित नै चुर्लुम्म डूब्यो मन ॥

पैल्हे सागर वा हिमालय पनी जो नाघुँला भन्दथ्यो,

ऐल्हे आँगनसम्म नाघ्नु परदा साथी गुहार्नै भयो ।
जस्ले यो मुलुकै सुधार्न अघि ता कम्मर कसेको थियो,
देखी दुःस्थित आज, धीर अघिको बन्धन् सबै फुस्कियो ॥

धर्मात्मा कहलाउँला, धन पनी धेरै जमा पारुँला,
बाँचुञ्जेल सबै म सोख लिउँला, मुक्ति पछी पाउँला ।
यी चारै पुरुषार्थ सिद्ध गरुँला, भन्दै थियो यो मन,
अल्छ्याईँ खलका परेर छलमा लाग्यो यसै घोत्लिन ॥

जानुन् संस्कृत बोलि बोल्न सबले यै मातृ-भाषा बनोस्,
चौधै शास्त्र पुरा पढुन् द्विजहरु देशै उज्यालो बनोस् ।
यस्तो तत्बिज पार्न यत्न गरुँला भन्थ्यो अघी जो मन,
ऐल्हे त्यै मन अल्छि भैकन हरे ! लाग्यो यसै लत्रन ॥

हे आलस्य ! तँ पाजि जा पर छिटो सर्वस्व तैँले हरिस्,
उस्ता उत्तम सद्-विचार मनका तैँले त बर्बाद् गरिस् ।
तैँ छस् अल्छि तँ बस्, निदा तँ दिउँसो,  तैँ पल्टि ए दुश्मन,
लुम्रो आफू तँ छस् भनेर दुनियै लुम्रो बनीयोस् किन ?

तैँ पासा पनि खेल् ! तँ तास पनि खेल् तैँ बुद्धिबल्गीर खेल्,

तैँ खा भाङ, अफीम, दारु टुहुरा ! तैँ मूर्ख कौडी धकेल् !
तैँ हेर नाटक, नाच, जादु, रमिता बोल्ती सिनेमा तैँ हेर्,
अर्कालाई बराल्नु छैन भतुवा ! जो गर्नु आफैँ तँ गर् ॥

हे आलस्य ! तँ भागि जा पर- परै बैरी यहाँ आउनन्,
लेथ्नु लेथ्नु र थिल्थिलो गरि-गरी तेरा करङ् छामिनन् ।
तैँले बस्नु जुवाडीमा, असतिमा क्रोधी छुचा चोरमा,
पागल नास्तिक डाकुमा र ठगमा हत्यारामा जारमा ॥

हट् लुच्चा ! अब ठाउँ खालि गरिदे यो ठाउँमा बस्न ता,
आए आँट र फुर्ति जाँगर इलम् विश्वास उत्साहिता ।
जम्ने छन् यस ठाउँमा अब यिनै उद्योगका लश्कर,
मिल्ने छैन तँलाई निश्च य बुझेस् रत्ती यहाँ आदर ॥

ए नानी मन ! छाडिदे तँ पनि यो आलस्यको सङ्गति,
यस्ले नास्दछ आयु सम्पति मती प्रीति हुती सदि्गत ।
ठूला कार्य चिता अधर्म नचिता उद्योगले दिन् बिता,
आफ्नो सत्व फिँजा, प्रभूकन रिझा, सत्कर्म हर्दम् चिता ॥

## प्रश्नस उत्तर

त्याग्ने योग्य छ के ? कुकर्म कुमति दुःसङ्ग निन्दा रिस ।
लीनै योग्य छ के ? भला सुजनको शिक्षा र विद्या यश ॥
गर्नै योग्य छ के ? पिता र गुरुमा श्रद्धा र सत्सङ्गति ।
दीनै योग्य छ के ? सुपात्रहरुमा विद्या मति सद्गतति ॥ 1 ॥

क्या हो भूषण ? शील सत्य र मिठो बोली र विद्या गुण ।
क्या हो बन्धन ? वासना र ममता पत्नी र मैलो मन ॥
क्या हो दुःख ? कुबुद्धि मूर्ख हुनु वा संसार लुब्धिनु ।
क्या हो सौख्य ? विरक्त बन्नु परमात्मा चिन्नु शान्ति लिनु ॥ 2 ॥

क्या हो पथ्य ? स्वधर्म, के नरक हो ? हर्दम् पराधीनता ।
क्या हो दान ? नगर्नु लाभ यही हो, के दीन हो ? मूर्खता ॥
क्या हो इज्जत ? क्यै नमाग्नु कहिँ गै, के हो निशा ? प्रेम हो ।
क्या हो अमृत ? अर्ति, के छ विष झैँ ? हेलाँ हुनू सन्तको ॥ 3 ॥

को हो सद्गुरु ? जो छ तत्त्व बुझने सत्मार्गमा लाउने ।
को हो पण्डित ? सत्य वस्तु ढुंढने सत्मार्ग पैल्याउने ॥
को हो शूर ? नयाँ अगाडि तरुणी देखेर डग्दैन जो ।
को हो वीर ? लडेर इन्द्रिय जिती मन्लाई पक्रन्छ जो ॥ 4 ॥

को हो डाकू ? यहाँ यिनै विषय हुन्, को शत्रु ? आलस्य हो ।
को बैह्रो ? हितका कुरा नसुनने, को वैद्य ? वैराग्य हो ॥
को अन्धो ? धन जो बटुल्छ दुनियाँ चूसेर अन्यायले ।
को कङ्गालि कहिन्छ ? आतुर सदा जो छन् असन्तोषले ॥ 5 ॥

को ज्यूँदो छ ? अपार कीर्तिहरुले संसार जस्ले भरे ।
को जागो छ ? सधैँ सुखै सुख हुने सत्कर्म जस्ले गरे ॥
को लाटो ? घतका कुरा बखतमा बोल्दैन जो शर्मले ।
को हो मूर्ख ? निजै उँधैतिर सदा खाँदिन्छ जो कर्मले ॥ 6 ॥

छोरो कस्कन भन्नु ? आफ्नू कुलको उद्धार जसबाट छ ।
को हुस्सू ? जननी पिता र गुरुमा जस्को अविश्वास छ ॥
को हुन् शीतल चन्द्रमा सरि सदा ? भैँमा यिनै सज्जन ।
कस्को छुट्तछ दुःख ? सक्छ जसले संसार छोडी दिन ॥ 7 ॥

कुन् काँढा मुटुभित्र शूलसरि भै चस्कन्छ जन्मै भरि ?
गुप्ती पाप गर्योि लुकि-लुकि भने त्यै हो सुहीरो सरि ।
केमा गर्नु सदा प्रयत्न नरले ? सत्सङ्गमा दानमा ।
दीर्घायु हुनुमा र तत्त्व लिनमा विद्या, कला सिक्नमा ॥ 8 ॥

केमा मान्नु घृणा ? पराइ धनमा स्त्रीमा, छुचामा पनि ।
के गुन्नू ? कति बाँचुँला, म कुन हुँ ? संसार के हो भनि ॥
कसलाई जड भन्नु ? जो दिन यसै फाल्छन् निरुद्योगले ।
को हो उल्लु ? सुकाउँछन् शरीर यो जस्ले वृथा शोकले ॥ 9 ॥

के सुन्नू ? उपदेश शास्त्रहरुका सुन्नू लगाई मन ।
क्या हो चञ्चल पद्म-पत्र जल झैं ? आयू जवानी धन ॥
ख्याल राखीकन गर्नु काम कुन हो ? प्राणीहरुको भलो ।
प्यारो के छ यहाँ ? बडो प्रिय सबैभन्दा यही प्राण हो ॥ 10 ॥

क्या हो जानिनसक्नु ? नारि-जनको जानिन्न छट्टू पन ।
को हो चङ्ख ? ठगिन्न नारि-जनको छट्याइँले जो जन ॥
को हो मित्र ? दिँदैन पापतिर जो कैल्ह्यै कतै ढल्किने ।
कस्ले पाउँछ दानको फल ? लिँदैनन् दान जस्ले कुनै ॥ 11 ॥

प्राणै दीकन नै बुझाउँ तापनी बुझ्दै नबुझ्ने छ को ?
मूर्ख, क्रोधि, कृतघ्न, पागल, अहङ्कारी र शोकायको ।
कस्ले सक्दछ पार्न आफ्नु वशमा सारा दुनियाँ कन ।
जो छन् नम्र र साँचिला र मधुरो बोल्ने रसीला जन ॥ 12 ॥

कुन् ठूलो डर हो ? 'मरिन्छ कि' भनी यौटै छ गाह्रो डर ।
के सत्-सङ्गति हो ? सधैँ सुख दिने मैत्री बडाको घर ॥
रोक्ने उन्नतिलाई के छ ? डर वा लज्जा अहङ्कार छन् ।
कस्ले यो जगतै जित्यो ? सहन जो जस्तै पनि सक्तछन् ॥ 13 ॥

कस्को पूजन गर्नु ? वेद- विधिका आचार जो थाम्दछन् ।
द्यौताले पनि ढोग्न लायक छ को ? जस्मा दया धेर छन् ॥
यत्रो भूतल यो छँदैछ त पनी बस्नू कहाँको निको ।
बस्नू सज्जनका समीप अथवा होस् वास काशीजिको ॥ 14 ॥

साह्रै चञ्चल के कुरो छ बिजुली झैँ झुल्कि अस्ताउने ।
छोटाका सँग मित्रता र युवती छन् देखिने अल्पिने ॥
को होलान् कुल शील लत्रन नदी थाम्ने कली कालमा ।
हुन्छन् सत्पुरुषै कुलीन कलिमा चल्छन् निजै चालमा ॥ 15 ॥

कस्ता मालिकको छ कीर्ति सुकिलो ? जो छन् सहू सर्वदा ।
बाटो लाग्नु कता ? कूलीन अघिका पूर्खा गएथे जता ॥
कस्को शोक गरौँ ? अनेक धन भै खोटी छ कञ्जुस जो ।
कस्को गर्नु बयान ? कम्ति धन भै बाँड्दैछ खाँदैछ जो ॥ 16 ॥

कस्तोलाई पवित्र भन्नु ? मनले जो शुद्ध छन् भित्रका ।
कस्तो व्यक्ति अधम् कहिन्छ ? जसका छैनन् इलम् डीकका ॥
केले उम्रन लाग्छ मोक्ष बिरुवा ? सप्रन्छ कुन् चालले ।
ज्ञानै हो बुझ बीज मोक्ष-रुखको, सप्रन्छ आचारले ॥ 17 ॥

यस्तो कुन् लहरो छ यो जगतमा जसले जगत् जेलियो ?
तृष्णा यै लहरो छ सर्व दुनियाँ यस्ले जगत् जेलिय ।
श्रद्धा गर्नु सदा कहाँ हृदयले ? माता पिता देवमा ।
राजा, ब्राह्मण, गाइ, सत्पुरुषमा, धार्मिकमा वेदमा ॥ 18 ॥

कुन् हो दान ? अमोल खूशि मनले जो औसरैमा दियो ।
के गर्दा अलुको भइन्छ ? कहिँ गै माग्यो कि इज्जत गयो ॥
कान्ता झैं गरि पाल्नू कस्कन यहाँ ? मैत्री करुणा कन ।
निर्धामा करुणा रहन् सुजनमा मैत्री रहन् दिन्दिन ॥ 19 ॥

कोदेखि हुनु दिक्क दिक्क मतिमान् संसार देखि भए ।
केले तर्न सकिन्छ? भक्ति रसले धेरै जना पार गए ॥
साक्षात् देव अगाडि छन् कुन यहाँ ? माता पिता ब्राह्मण ।
राजा वेद सती नदी गुरु बतास गौ घाम आगो जुन ॥ 20 ॥

केले दान सपार्छ ? भक्ति र मिठो बोली र सत्कारले ।
केले ज्ञान विगार्छ ? 'छू म गतिलो' भन्ने अहङ्कारले ॥
केले सम्पतिको सपार्छ महिमा ? सत्पात्रमा दानले ।
केले दिन्छ चमक पराक्रममहाँ ? भक्ति क्षमा मानले ॥ 21 ॥

यी प्रश्नो त्तरका सबै पदहरु कंठस्थ पारिलिनू ।
सारा यी गुण अर्तिलाई मनमा साँचेर राखीलिनू ॥
गर्ने गर्नु यहाँ भनेजति कुरा बन्नू गुणी सर्वदा ।
यस्तै गर्दछ बिन्ति दिन् दिन 'जगन्नाथ' प्रभूमा सदा ॥ 22 ॥

**॥ ईश्वर- भरोसा भजन ॥**

अयि यगदीश्वर ! विभु ! शिवशङ्कर !
करुणासागर ! शान्ति म पाऊँ !
प्रभुका चरण म शरण बनाऊँ,
प्रभुमै मन यो अचल गराऊँ ॥
-ध्रुवपद

तिमी हौ ब्रह्मा विश्व-विधाता,

नारायण हौ पालन कर्ता ।
तिमी हौ आखिर सद्‌ग्त-दाता,
साम्ब-सदाशिव ! शान्ति म पाऊँ ॥ अयि जगदी०

धरणी भूधर जलधर धारा,
घाम बतास र सागर सारा ।
थलचर जलचर ग्रहगण तारा,
तिमी हौ सबका शक्ति सहारा ॥ अयि जगदी०

दिनमणि तिमी भै दिवस बनायौ,
रजनीचर भै बीज फिजायौ ।
पृथिवी बनि सब चीज उब्जायौ,
बादल भैकन वृष्टि गरायौ ॥ अयि जगदी०

चीनी छ उखुमा, दूधमा घीऊ,
जसरी बोटविषे छन् बीऊ ।
उसरी त्रिभुवन जीवन स्वामी,
तिमी छौ सबमा अन्तरयामी ॥ अयि जगदी०

ब्रह्मलगायत भुसुना सम्म,

जति छ चराचर त्रिभुवन टम्म ।
बीज र बिरुवा सरि समरुप,
सब छन् बिभुकै अंश-स्वरुप ॥ अयि जगदी०

## ॥ सत्सङ्ग ॥

बुद्धि तिखो वचन सत्य र मान-बुद्धि,
चित्त-प्रसन्न र जगत्भरि शुद्ध कीर्ति ।
पाप-प्रणाश हरिका पदमा प्रवृत्ति,
सत्सङ्गले कुन हुँदैन र कार्य सिद्धि ॥

## ॥ सत्पुरुषका गुण ॥

तृष्णा तोड, गर क्षमा, भज, हरी, बाटो बडाको धर,
साँचो बोल, नराख पाप मनमा, माया दुखीमा गर ।
कीर्ति थाम, घमण्ड छोड, कुलको चाला समाल्ने गर,
मान्ने मानिसलाई मान र सखे ! मिल्ला सधैँ आदर ॥

## ॥ ठूला- ठूला काम चिताऊ ॥

कैले सक्नु ठूलो छ काम, भनि यो मान्दै नमान्नु डर,
पुग्छन् हेर हिंडीरहेर कमिला हज्जार कोसौं पर ।
'थालौंला नि बखत् छँदैछ' भनि यो भाका नराख्ने गर,
पुग्दैनन् गरुडै पनी नउडि ता त्यै पाँच वित्ता पर ॥

## ॥ बिघ्नदेखि नडराऊ ॥

पर्ला बिघ्न भनेर काम गतिला थाल्दैन नामर्दले,
पर्दा बिघ्न  चटक्क काम बिचमै छोड्दिन्छ कम्मर्दले ॥
बारम्बार कठोर बिघ्नहरुले कस्तै दिउन् ठक्कर,
थालेको निज काम सिद्ध नगरी छोड्दैन शूरो नर ॥

## ॥ समुद्र मन्थन - थालेका काममा अटल रहूँ ॥

लागे सागर मथ्न जोर गरि जसै खल्खल् पसीना छुटे,
क्वैका छात्ति फुटे कमर् कति टुटे, ठेला सबैका उठे ।
त्यै बेला डुबिगो मधानि र पनी द्यौता डटेरै रहे,
उद्यमी जन कार्य सिद्ध नगरी हट्तैन कस्तै भए ॥

लागे उफ्रन काल-कूट विषका धारा शिरैमा झरे,

द्यौता मूर्छित भै भकाभक गिरे, भैंमा पसारा परे ।
धेरै बेर पछी उठे कठिनले फेरी मथे सागर,
उद्योगी निज कामको फल नली हट्तैन कस्तै गर ॥

बज्रन्थे पहरा जती विपदका द्यौता उती मथ्दथे,
दीए रत्न समुद्रले तर यसै द्यौता कहाँ हट्दथे ।
पाएनन् जब सम्म अमृत घडा गर्दै रहे मन्थन,
ताकेको फल मुट्ठीम भित्र नपरी हट्दैन शूरो जन ॥

## ॥ कुलले ठूलो गराउँदैन, कामले गराउँदछ ॥

घडा नाथुको जन्म हो तैपनि ती,
तिनै लोकमा गाइँदैछन् अगस्ति ।
कुलै भो ठूलो भन्नमा धाक के छ,
पुरुषार्थले नै गतिलो कहिन्छ ॥

## ॥ शुद्ध काम थाल, लोकसँग नडराऊ ॥

बद्नामी नै गरून् वा चतुर जनहरु नाम राम्रो फिजाउन्,
श्रीसम्पत्ती भरियुन् घरभरि अथवा स्वात्त निश्रेर जाउन् ।

ऐल्यै मर्नु परोस् वा युगपछि- मरियोस्, भैं फुटोस् वा पटक्क,
थालेको काम पूरा नगरिकन यसै वीर बस्तैन ढुक्क ।

## **॥ दुःख पर्योर भनेर नलत्र ॥**

ठूलो राख्छ विचार, थाम्छ कुलको इज्जत् सदा धीरले,
खोटो कर्म चिताउँदैन कहिल्यै दारिद्र्यका पीरले ।
कस्तै वृद्ध रहोस् कती दुःख सहोस्, कस्तै गलोस् भोकले,
मत्ता हात्तितिरै चढाउँछ नजर खाँदैन घाँस बाघले ॥

कस्तै दुःख परुन् उ लत्रन यसै धीरा काहाँ मान्दछन्,
आगोलाई तलै खसाल त पनी ज्वाला उँभै उठ्दछन् ।
जाओस् प्राण बरु स्वधर्म जसले छोड्दैन त्यै धन्य हो,
पर्ला तात्नु भनेर हेर हिउँले देहै गलाई दियो ॥

## **॥ तेजिलो हुन सिक ॥**

यौटै घाम उदाइ भूतल भरी खुट्टाग घुमाई लिए,
यौटै सागरले तिनै भुवनमा रत्नै फिँजाई दिए ।
यौटै काल उठेर प्राणी सबको सातो उडाई दियो,

तेजस्वी बन शक्तिमान बन सदा, एक्लो हुँदा के भयो ॥

## ॥ मोटाई र लम्बाईभन्दा तेजै ठूलो हो ॥

सानै अङ्कुशका परेर वशमा हात्ती भरिया भए,
साह्रै सानु छ वज्र, तैपनि बडा पाहाड पैह्रा गए ।
बत्ती सानु छ, तैपनि सब अँधीयारो कता गो कता,
मोटो लामु भएर के छ र सखे ! चाहिन्छ तेजस्विता ॥

## ॥ उद्योगी बन ॥

लेखेको जति भाग्यमा छ उति ता मिल्न्यै छ पक्का भनी ।
उद्योगै सब छोड्दिने पुरुषको नाशिन्छ भाग्यै पनि ॥
तोरीमा तिलमा छ तेल, तर त्यो आफैँ कहाँ झर्छ र ।
पेल्नैपर्छ बिना प्रयत्न मुखमै आएर के पर्छ र ?

## ॥ उद्योगैबाट भाग्य बन्दछ ॥

अघिल्ला जन्मैमा श्रम गरि जती पुण्य गरिए,
उनै यस् जन्मैमा धन जन दिने भाग्य बनिए ।
जती ऐले जन्मैभरि असल सत्कर्म गरिनन्,
यिनै दोस्रा जन्मैभरि सुख दिने भाग्य बनिनन् ।

उद्योग गर्नु अनि कार्य पुरा बनिन्छ,
खाली मनोरथ गरी फल मिल्नु के छ ।
पाउ म खान भनि सुस्त सुती रहेर,
पस्तैन आइ मुखमा मृग बाघ-नेर ॥

## ॥ धर्म गर ॥

न ध्यानै शिवको गरेर पछिको जञ्जाल मटीदियौ,
न स्नान ब्रत दान तीर्थ जपले स्वर्गै पनी आर्जियौ ।
पौसाला पुल पाटिले न त यहीं नामै चलाई लियौ,
यौटै क्यै पुरुषार्थ सिद्ध नगरी यो जन्म फालीदियौ ।

## ॥ उमेर छँदै होश गर ॥

चङ्गा चित्त छँदै उभेर रहँदै पैसा छँदै हातमा

व्याधीले नछुँदै र आयु रहँदै बर्गत् छँदै गाथमा ।
आफ्नू श्रेय हुने पछी सुख हुने धन्धा छिनीहाल है,
आग्लागी घरमा भएपछि कुवा खन्दा हुनेछैन है ॥

## ॥ उमेर बितेको चाल पाइँदैन ॥

आयु छिन्न हुँदैछ रात दिउँसो हप्ता र मैह्ना बनी,
थाहै हुन्न अनेक काम रहँदा बेला बितेको पनि ।
देख्छौँ जन्मनु मर्नु रुनु बुढिनू वैराग्य उब्जन्नँ तै,
के होला नि भरे ? कसोगरि कहाँ ? के भोग्नु पर्लानि है ।

## ॥ धर्मको फल ॥

तेस्का खातिर अग्नि पानिसरि हो खोल्सिरी सागर,
मेरु तोरिसरी, बँदेल मृगसरी, दासैसरी बाँदर ।
बिच्छी फूलसरी, हलाहल पनि शर्वत्-सरी बन्दछ,
जो मानीस दयालु धार्मिक गुणी विद्वान् सहू शान्त छ ।

## ॥ स्वरूप, (जाति धर्म) नछोड ॥

'ल्याऊँ स्वजाति सब पाऊँ गरम्' भनेर
लागे तताउन 'हिउँकन' सूर्यवीर ।
आफ्नू स्वरूप तजि बाँच्नु त मर्नु निको,
भन्दै कुलीन 'हिउँ वीर' उहीं गलीगो ॥

दन्की रहेछ बडवाग्नि त ताल्नु छैन,
कत्ती मिलुन् हिमनदी त चिसो हुँदैन ।
देखिन्छ सागर सधैं भरि एकरूप,
छोड्दैन धीर सुख वा दुःखमा 'स्वरूप' ॥

लाभ के हो ? भने सन्तको संगति,
दुःख के हो ? भने मूर्ख को संगति ।
हानि के हो ? भने आयु बिताउनु,
के चतुर्याइँ हो ? धर्म जोगाउनु ॥

शूरो को ? जित्छ जो यी दस इन्द्रिय,
स्वास्नी को ? गर्दछे जो पतीको प्रिय ।
के छ सम्पत्ति, विद्या मुखैमा हुनु,

जन्मको सार के ? धर्म जोगाउनु ॥

## ॥ सत्यवादी बन ॥

रोकेकै छ अझै हलाहल विष श्रीशम्भूले घाँटिमै,
बोकेकै छ अझै धरातल पनी ती कूर्मले पीठमै ।
थामेकै छ समुद्रले उदरमा त्यो बाडवाग्नी पनि,
पाल्छन् आफ्नू जवान भद्रजनले आखीरसम्मै पनि ।

## ॥ पृथ्वी थाम्ने सात रत्न ॥

गाई, ब्राह्मण, वेद दानि र सती, निर्लोभि साँचा जन,
ब्रह्माले यहि सात रत्नहरूको पैली गरे सिर्जन ।
सारा सृष्टि समाल्न भूमितलमा राखीदिए, प्रेमले,
थामिन्छिन् पृथिवी यिनै सृजनका सत्कर्म सत्-धर्मले ॥

## ॥ लिन र छोड्न योग्य सद्गुनण र दुर्गुण ॥

छैनन् लोभ-समान दुर्गुण अरू चुक्ली ठूलो पाप हो,
साँचो बोल्नु यही ठूलो तपस हो, शुद्धी मनै तीर्थ हो ।

विद्या नै धन हो, सखे ! जगतमा दुर्नाम यै मृत्यु हो,
कीर्ति हो गहना सुशील रहनू यै इष्ट वा मित्र हो ॥

## ॥ सत्यवादीहरूको क्यै उदाहरण ॥

रानी राजकुमार, आफू सहितै बेचे हरिश्चन्द्रले,
राजा विक्रम राज्यबाट धपिए एक्ला वनैवन् डुले ।
घुम्थे पाण्डव द्रौपदी वनवनै साम्राज्य त्यागीकन,
अर्पिन्छन् सब सत्यवादीहरूले सर्वस्व आयु धन ॥

## ॥ प्रतिज्ञा पाल ! ॥

सदा शान्ति आनन्द मन भित्र गर्ने,
दशै ती दिशामा लगी कीर्ति भर्ने ।
यी यस्ती 'प्रतिज्ञा' कनै ख्याल राख,
बरु प्राण जाउन्, प्रतिज्ञा नपोख ॥

धनको मनको जहानको,
जति आनन्द छ नाम मानको ।
सब जान्छ त दुःख मान्दिन,

तर आफ्नू म कबूल छोड्दिनँ ॥

तेस्का खातीर सारा धन तृण सरि हो, रात घूँसोसरी हो,
मेरु ढिस्कोसरी हो, जल थलसरि हो, सिन्धु खोलोसरि हो ।
गर्मी छायासरी हो, वन घर सरि हो, भूमि आँग्नैसरी हो,
जस्ले यो काम गर्छू भनि दृढ मनमा सत्य संकल्प लीयो ॥

## ॥ दुःखीको उपकार गर ॥

आफ्नू हानि पनी सहेर अरुको गर्छन् भलो सन्तले,
आफ्नू हानि नपारि गर्छ अरुको उद्धार सामान्यले ।
अर्कालाई बिगारि आफू बनिने यो राक्षसो काम हो,
व्यर्थै जो अरुलाई पिर्छ उसको जान्दीन के नाम हो ॥

## ॥ परोपकारको पाठ सूर्य भगवानसँग सिक ॥

बाह्रै मास छ एक नास बलले आकाशमा पौडनु,
बस्ने छैन टुसुक्क फुर्सद भने सुत्ने कुरै के हुनु ।
कस्तो घोर ठिका सकारि भगवान् श्रीसूर्य कुद्दैहछन,
अर्पन्छन् उपकारमा सुजनले आयु शरीरै धन ॥

माग्नेलाई दिए दधीचि मुनिले आफ्नू शरीरै पनि,
तीनैलोक समग्र राज्य दिनुभो राजा बलीले पनि ।
अर्पे कैटभले र फेरि मधुले भिक्षुकलाई शिर,
साटे नश्वर देहबाट उनले सत्कीर्ति नित्य स्थिर ॥

मूलैबाट नमास्नु लाउनु पूँजी दोबर हुने डोरमा,
जेठैमा बिउनै निलेर पछि लौ के खानु मंसीरमा ?
थोरै सम्पत्तिमै फुरुक्क परि जो गर्दैन उद्योग ता,
यो ता तृप्त भयो भनी धन दिनै छोड्छन् उता देवता ॥

जस्तै यौटै चक्काले त्यो
गाडी चल्नै सक्तैन ।
उस्तै भाग्यै मात्रैले त्यो
सम्पत्ति मिल्नै सक्तैन ॥

जो पैला जन्मको हो जप तप उपकार आदि उद्योग हाम्रो,
त्यै ता यो जन्ममा भो धन र जन दिने दैव वा भाग्य राम्रो ।
ऐलेनै वा भरे वा जति सुख लिनु हो सो पुरुषार्थबाट,
पाइने हो भनी यो दृढ गरि मनमा गर्नु उद्योग आँट ॥

के आफ्नु देश अनि के छ बिरानु देश,
जो आँटिलो छ उसलाई सबै स्वदेश ।
उत्साह जाँगर पराक्रमले डटेर,
निर्धक्क भैँ जहिँतहीँ गरि खान्छ वीर ॥

## ॥ व्यवहारमा नभई नहुने गुण ॥

आफ्नामा सजिलो, दयालु अरुमा, छट्टु  छुचामा हुने,
प्रेमी सज्जनमा, निसाफि नृपमा, विद्वानमा न्यूरने ।
नारीमा चतुरा, बलिष्ठ रिपुमा, राख्ने बडामा क्षमा,
जस्मा छन् यि कला उही जहिँ तहीँ मानिन्छ संसारमा ॥

## ॥ उद्योगमा लागेको मानिस दुःखदेखि डराउँदैन ॥

कतै खाली भैमा कहिँ पलङ्गमा सुत्छ सुखले,
कतै ढीँडो रोटी कहिँ खिर मिठो खान्छ मजाले ।
कतै मैला थाङ्ना कहिँ छ पहिरन् दिव्य तनमा,
मनस्वी उद्योगी सुख र दुःख गन्दैन मनमा ॥

## ॥ लक्ष्मीको बास कहाँ हुन्छ ॥

बिना पैसै उक्ले कति शिखरमा मान धनका,
धनै धेरै भै भै कति बनिसके कौडि भरका ।
जता उद्दिम् उत्साह बल छ उतै धाउँछ धन,
सुकेका जङ्गल्मास मृग सहज मान्दैन रहन ॥

## ॥ आफ्ना दुःख जहाँ तहीँ नपोख ॥

ए काकाकुल ! सावधान मनले यौटा कुरा सुन् यता,
आकाशै भरि मेघ छन् तर सबै छैनन् यकैनासका ।
क्यै छन् पानि दिने नगर्जिकन नै क्यै गर्जने मात्र हुन्,
जो-जो पर्छ अगाडि त्यससित नरो जानेछ व्यर्थै वचन् ॥

## ॥ धक्का नलागि शक्ति प्रकट हुँदैन ॥

न सीता हरिन्थिन् न रामै सुरिन्थे,
न बाली शुलिन्थ्यो, न बाँदर झुमिन्थे ।
न सागर तरिन्थ्यो, न लङ्का जितिन्थ्यो,
न ठोसी अगुल्टो कहाँ अग्नि बल्थ्यो ॥

## ॥ धनको सती ॥

धस्कोस् इज्जत् रसातल्तिर, अङ्ग तलगै घोप्टियोस् पाजि जात
फूटोस् खप्पर् दयाको जप-तप पनि यी मन्टियुन् भीरबाट ।
ऐल्यै लागोस् डढेलो यिनी गुणहरुमा, धन् मिले भो मलाई,
जस्का खातीर सारा गुणहरु पनि ती गर्दछन् हाई-हाई ॥

## ॥ उद्योग सिद्ध नभएमा सन्तोष मान ॥

पत्नी शीलवती र पुत्र गुनिलो, मालीक हाँसीमुख,
प्रेमी मित्र र दाजु-भाइ सजिला, माता-पिता सम्मुख ।
आम्दानी धनमा र चैन मनमा, कंठस्थ विद्या सदा,
राम्रो रुप, जहान मेल जुलको, पाइन्छ भाग्यै छँदा ॥

लेखे आफ्नु ललाटमा धन अघी धेर-थोर जो दैवले,
त्यै मिल्दछ सुमेरु माथि बस वा घरभित्र वा मोजले ।
तस्मात् धीर रहू वृथा धनिकका साम्ने नझुक्ने गर,
कूवामै भर वा समुद्र पुग वा जल मिल्छ लौटै भर ॥

वनैपिच्छे मिल्छन् सहज-सित मन्माफिक फल,
नदीपिच्छे बग्दै छ हिउँ-सरिको शीतल जल ।
बिछ्यौनाका लागी बटुल कमला पात रुखका,
सहन्छौ दैलामा किन धनिकका गालि रिसका ॥

यो पृथ्वी भरि अन्न फल्दछ जती सम्पूर्ण आफ्नै रहोस्,
सारा भूतलको सुवर्ण जति हो आफ्नै खटन्मा रहोस् ।
पृथ्वीभर जति नारी सुन्दरि हुनन् सारा ती आफ्नै हुनू,
यो मन् तैपनि तृप्त हुन्न नि सखे ! सम्झेर शान्तिलिनू ॥

## ॥ मूर्खलाई रिझाउन सकिँदैन ॥

बालूमा बरु तेल खुब बलले पेले कतै आउला !
चर्का घाम चुसी-चुसी बरु कतै पीयास मेटीयला !
मूसाको सिंग मीलला बरु कतै संसार घुम्ने गरे ।
प्राणै देऊ परन्तु मूर्ख कहिल्यै रिझ्दैन कस्तै गरे ॥

## ॥ मूर्खलाई उपदेश दिएको फल छैन ॥

गोहीको मुखमा पसीकन पनी सक्ला बरु निस्किन ।
पानी माथि कुदेर सागर तरी सक्ला बरु पार हुन ॥

जिस्क्याईकन सर्प राख्न शिरमा सक्ला शरू क्वै जन ।
सक्ने छैन परन्तु मूर्ख नरको मन्लाई सम्झाउन ॥

## ॥ मूर्खको ओखति छैन ॥

आगाको जल, घामको र जलको छाता लुगा शीतको,
तीखो अंकुश हात्तिको र लहुरो भैँसी गधा गोरुको ।
गर्मीको जल-वायु, मन्त्र विषको, बत्ती अँधीयारको,
सब्को औषधि दैवले रचिदियो, बिर्से छ कि मूर्खको ?

## ॥ सज्जन र दुर्जन का चिह्न ॥

दोषैलाई गराइ सद्गुण सखे ! बोल्छन् गतीला जन,
अर्काका गुणलाई दुषित गरी फैलाउँछन् दुर्जन ।
नूनीलो जल मेघले लगि मिठो पारेर वर्षाउँछन्,
आलो दूध पियेर सर्पहरुले साक्षात् विषै पार्दछन् ॥

## ॥ दुष्टका लक्षण ॥

दया नगरनू कतै, झगडिनु बिना कारण ।
पराया धन नारिमा रहनु लुब्ध भै यो मन ॥

क्षमा नहुनु सन्तमा गरिबमा र आफन्तमा ।
यि दुर्गुण ढुडौं भने सकल मिल्दछन् दुष्टमा ॥

## ॥ नाना विषय ॥

लज्जा भापछि गहना के हो ? विद्या भापछि धन के हो ?
कपटी जो हो सर्प उही हो, मतलबी बन्धु यही आगो हो ।
क्रोध यही हो पक्का शत्रु, धर्म सबैको साथी हो ।
माता सरिका ओखति छैनन्, मित्र पतिव्रता पत्नी हो ॥

## ॥ आयु बढाउनेले यति आठ काम नगर्नू ॥

अल्छी भै रहँदा पवित्र नहुँदा, आचार छाडी दिंदा ।
जस्तो अन्न जहाँ-तहाँ जतिसुकै बेला मिलोस् खाइँदा ॥
अभ्यास श्रुति शास्त्रको नगरिंदा चिन्ता र सुर्ता लिंदा ।
आयु घट्तछ मिल्छ झट्पट सखे ! संसारबाटै विदा ॥

## ॥ काम, क्रोध र लोभलाई त्याग ॥

सुन्दरि जनका छल-जालमा,

जो नर बेहिन पुग्दैनन् ।
क्रोध डढेलो दन्कन लाग्दा,
जो जन रन्कन लाग्दैनन् ॥

मधुरा मधुरा भोग मिलेमा,
जो नर पर-पर तर्किन्छन् ।
उस्ता धीरा नरले सारा,
जगतै वशमा गरिदिन्छन् ॥

## ॥ सम्मान ॥

मानै ब्राह्मण हो ! नखोज कहिल्यै यो मनदेखी डर ।
यसलाई विष झैँ घृणा गर, परै तर्केर बस्ने गर ॥
अर्काको गर खूब मान मनितो, आफू नखोज्ने गर ।
यस्तो गर्नु र झन् हुनेछ बढता तिम्रो सधैँ आदर ॥

## ॥ सम्पत्ति सुख ॥

अब मन ! परमात्मा तर्फ फिर्का तँ बुद्धि,
धन धन भनि हिँड्ने छाडिदे यो कुबुद्धि ।

उति धन मिलिगैगो कर्म तेरो जती थ्यो,
खुशि रहु, किन थोरै कर्मले धेर मिल्थ्यो ॥

धनिक बनुँम ठूलो भै बसौंला तँ भन्लास्,
तर अहित छ यसमा लोक दोटै बिगार्लास् ।
अधिक धन हुनेको दूर्दशा हेर्न जा न,
कति रछ डर शङ्का वैर चिन्ता हरान ॥

तन, धन, सुत, दारा, बन्धु-बर्गादि सारा,
कति दिन रहने हुन् ! को छ यस्को सहारा !
कसरि किन म आएँ ! जानु पर्ने कता छ !
कति चिज सँग जाला ! यो सबै गुन्नुपर्छ ॥

धन जन र जवानीमा भरोसा गरेर,
'मम', 'मम' भनि गर्छस् के अहङ्कार धेर !
यहिँ वरिपरि घुम्छन् काल भोका शिकारी
कहिँ तँकन नखाउन् बाण हानेर मारी ॥

असली घर छ अन्तै खालि रित्तै छ ऐले,
अब उस घरमा गै बस्नु पर्नेछ तैँले ।

उहिँ पनि यहिकै झैँ भोक लाग्नेछ भाई !
शिव ! शिव ! पछि खाने के छ तेरो कमाई ?

**॥ कान्ता वियोग वैराग्य ॥**

यो संसार असार हो, बुझिसकेँ आफ्नू यहाँ के छ र !
पत्नी, पुत्र, शरीर, सम्पति सबै छन् ईश्वरका भर ।
मेरो भन्नु वृथा छ कर्म गतिले चौरासिमा डुल्दछौँ,
मेरो यो यति हो भनेर बिचमा व्यर्थै कतै झुल्दछौँ ॥

यस्ता जन्म बिते हुनन् अघि कति उद्योग भो हो कती !
पत्नी, पुत्र, शरीर, दौलत भए जन्मैपिछेका कति !
आफ्नै थे सब ती भने किन छुटे ऐले म यौटै किन !
तस्मात् क्यै पनि छैन आफ्नू वशमा यै शोच रातौँ दिन ॥

**॥ पश्चाताप ! (पछितो) ॥**

गरेँ वेदको पाठ हर्दम् न मैले,
न वेदोक्त सत्कर्म थामेँ क्रमैले ।
गरौँला गरौँला नि भन्दै म आएँ,

बिना कामले आयु मैले गुमाएँ ॥

न वेदान्त वा धर्मका शास्त्र हेरेँ,
बडाले भनेको न ता बात टेरेँ ।
न विद्या कमाएँ न भक्ति बढाएँ,
बिना कामले आयु मैले गुमाएँ ॥

न निष्काम भै धर्ममा चित्तलाएँ,
न कौनै कुरा देवतामा चढाएँ ।
न क्यै पाप चान्द्रायणैले घटाएँ,
बिना कामले आयु मैले गुमाएँ ॥

न संसारमा सार वा दोष खोजेँ,
न वैराग्य वा रागमा एक रोजेँ ।
न कान्ता न शान्ती कुनै हात लाएँ,
बिना कामले आयु मैले गुमाएँ ॥

न सत्सङ्गमा काल मैले बिताएँ,
न एकान्तमा गै समाधी लगाएँ ।
न मन्लाई रोकेर भित्रै जमायेँ,

बिना कामले आयु मैले गुमाएँ ॥

न योगी महात्मा सँगै बस्न पाएँ,
न सेवा गुरुको पुरा गर्न पाएँ ।
न माया हटाएँ न धर्म बचाएँ,
बिना कामले आयु मैले गुमाएँ ॥

न सुर्ता अहङ्कार चिन्ता धपाएँ,
न शङ्का अहारीस लोभै घटाएँ ।
न यो चित्तका दोष सारा छुटाएँ,
बिना कामले आयु मैले गुमाएँ ॥

न माता पितालाई आनन्द पारेँ,
न पूर्खा अघीका सबैलाई तारेँ ।
न गै तीर्थमा बस्न हर्दम् रुचाएँ,
जगन्नाथ ! हा ! आज पो होश पाएँ ॥

## ॥ तत्त्व विचार ॥

हे नारायण ! विश्वरुप ! भगवन् ! आनन्दका मालिक,

चौधै लोक सदा प्रकाश गरने ब्रह्माण्डमा व्यापक !
नित्य ज्ञाननिधे ! सनातन ! हरे! श्रीशेषशायिन् विभो,
हाम्रा दण्डवत प्रणाम कृपया स्वीकार गर्नोस् प्रभो !

चारै वेद जुटी बयान उसको गर्छौं भनी गै डटे,
रत्ती अन्त नपाइ रूप गुणको लाटा सरी भै हटे ।
ब्रह्मा, शेष गणेशका पनि जहाँ बोली भए बेपता,
हामी मानिसले बयान गरनू यो ता कता हो कता ॥

**॥ परमेश्वर सेवा ॥**

यस्तै नै हुनुहुन्छ तैपनि जती वेदादि विद्या यि छन्,
अभ्यास स्तुति, भक्ति, कीर्तन सदा गर्दैरहूँ भन्दछन् ।
तस्मात् कीर्तनले तथा मननले अभ्यासले वर्णन,
लागौँ गर्न, डटौँ, पछाडी नहटौँ हामी पनि दी मन ॥

**॥ वैराग्य नभई- मुक्ति पाइँदैन ॥**

ज्ञानी खूब बनोस, भक्ति रसमा डुबोस भित्रै तक,
अभ्यास श्रमले गरोस नचुकी एकाग्र भै भरसक ।
वैराग्य-व्रत तीव्र छैन त भने कस्तै गरे ता पनी,
मिल्दैनन् अधिकार मुक्ति-सुखका कच्चै रहन्छन् तिनी ॥

मुक्तिका छन तीन साधन, यिनैलाई हत्याई लिनु ।
'आत्मा चिन्नु' र 'भक्ति गर्नु' मनमा–वैराग्य तीसो हुनु ।
हीरा, हार मणी र दिव्य–रमणी, साम्राज्य मिल्दा पनि,
सम्झन्छन् अति तुच्छ जो बुझ उनै वैराग्यका हुन् धनी ॥

**॥ तृष्णा र ममता अनि अहंता ॥**

'मेरो यो' भनिने अनी 'म' भनिने जे जे छ संसारमा,
फोस्रो यो सब हो क्षणैभरि छ यो क्यै छैन आखीरमा ।
तृष्णा जो यिन चीजमा छ गहिरो, पासो उही सम्झनु,
त्यो पासो नछिनाइ शान्ति सुखका आशा वृथा हो लिनु ॥

**॥ हाम्रो शरीर कस्तो हो ? ॥**

केले यो बनियो शरीर यसमा के शील वा सार छ ?
यस्मा आफ्नु खटन् छ छैन ? यसले के लाभ मिल्ने रछ !
सारा यी विषयादिको र यसको सम्बन्ध कस्तो रछ !
यस्तै खूब विचार हरदम गरे तृष्णा यसै गल्दछ ॥

**॥ यो शरीर केले बनेको हो ? ॥**

नारीमा ऋतुकाल बाद नरको सम्भोग लीदा हुँदा ।

निस्केका रज वीर्यबाट बनियो क्यै कालमा बुद्‌बुदा ॥
फेरी मासु नसा गिदी रगतको डल्लो हुँदै जम्नगो ।
जीवात्मा उस भित्र कर्मवशले घुस्रेर देही भयो ॥

## ॥ गर्भावासको क्लेश ॥

माताका अति साँगुरो उदरमा यो जीव गै ठेलिनू ।
विष्टा मूत्र खकारमा गुँडुल्दिँदै साल्नालले जेलिनू ।
हर्दम् पिल्सिनु पेटका उखुमले कीरादिले टोकिनु ।
नौ मैह्नातक घोर कष्ट सहँदै त्यै गर्भमा रोकिनू ॥

## ॥ जन्मने बेलाका क्लेश ॥

यस्तै दुःख सहेर बल्ल जब भो पैदा हुने कालमा,
तेर्छो भो यदि जन्मदा शिशु भने मिल्ला महाकालमा ।
छुराले उहिँ रेटि रेटि टुकुरा पारेर तान्नु परे,
त्यो बेला उस जीवको दुःख वहाँ को भन्नसक्ने हरे !

## ॥ पैदा हुँदाको क्लेश ॥

भैगो जन्म सिधै भने पनि यसै त्यो साँगुरो योनिमा,
पर्दा छिर्नु प्रसूति–वायु बलले धक्याउँछनु जोर्निमा ।
धक्का कोमल देहमा परन गै जो क्लेश होला वहाँ,

सक्ला को र बयान गर्न उसको फर्केर आई यहाँ !

**॥ जन्मीसकेपछि ता सुख हुनुपर्ने ॥**

आयो बाहिर बल्छ बल्ल र पनी यो घोर संसारमा ।
आधि व्याधि वियोग शोक झगडाका पर्नगो धारमा ॥
आफ्नामा अनि आफूमा जति विपत् दारिद्र्य पर्दा यहाँ,
भोग्नू संकट पर्छ ती दुःख सबै भन्दा सकिन्छन् कहाँ !

**॥ योनिहरु 84 लाख प्रकारका हुन्छन् ॥**

यो संसार अपार सागर हुँदा गाह्रो छ पारै हुन,
नाना योनि मनुष्य पंछि पशुका चौरासी लाखे छन ।
आफ्नै कर्म त आफ्नु बन्धन हुँदा यो जीव लज्जाउँदो,
हर्दम् क्लेश सहेर योनिहरुमा घुम्दो छ डुल्दो छँदो ॥

**॥ 84 लाख योनिमा मनुष्य जन्म नै उत्तम हो ॥**

यौटै मानिस देह नै छ बढिया चौरासी लाखौं बिच,
यो भन्दा पनि धन्य उच्च कुल हो आचार झन् मुख्य छ ।
त्यो हो झन् बढिया विचार छ जहाँ, झन् धन्य विद्वान् कुल,
साह्रै उत्तम ता छ वेद पढने आचारवान्को कुल ॥

**॥ मनुष्य-जन्मको प्रयोजन ज्ञान सिक्नु हो ! ॥**

पायोस् उच्च कुलीन देह त पनि आत्मा अनात्माकन,
चिन्ने यत्न र देहको क्षणिकता जान्दैन हो जो जन ।
कस्तै त्यो चतुरो शिपालु गुनिलो, विद्वान् भनीयोस् तर,
व्यर्थै आयु बितेर जान्छ उसको रोला पछी धर्-धर ॥

**॥ आयु साह्रै महँगो छ ॥**

नाना कोटी असर्फि लीकन कतै कस्तै ढुढौँ तापनि,
एकै नै छिन वा पलाभरि पनि यो आयु पाइन्न नी ।
यस्तो हाय ! अमोल आयु यसरी सारा वृथै गो भने,
योभन्दा अति हानि यो जगतमा हा हा! अरु के हुने ?

**॥ यो आत्मा पशु योनितिर गयो भने ॥**

आत्मा देह बिना रहन्न नरको यो देह छिन्नै हुँदा,
गैगो लौ पशु देहमै यदि भने सर्वस्वकै भो विदा ।
आफ्नू देह समाल्न छैन पशुको सामर्थ्य रत्तीभर,
गर्ला के परमार्थ साधन हरे ! रोला सधैँ धर्-धर ॥

**॥ पशुहरुको क्लेश ॥**

घोडा हात्ती र ऊँट गोरु, गदहा, राँगाहरु जान्वर,

भारीले थिचिएर भोक र तृषा खप्तै रुँदै धर्-धर !
जाडो घाम झरी बतास र हिलो धूलो र बालू बीच,
घस्रन्छन् दिन-रात मार पिटिँदै बोल्ने न सामर्थ्य छ ॥

## ॥ शरीरको स्वरूप ॥

हड्डीीका टुकुरा रसाइ रसले जोर्नी नसाले कसी,
मासूले उहिमाथि लिप्सि उसमा मासी र बोसो घसी ।
तेसैमा गिदि, रक्त, वीर्य छिटियो त्यै राश यो देह हो,
चाट्लान् काग कुकूरले भनि उहीँ छाला मढेको छ यो ॥

## ॥ के यो देश चोखो हो ॥

आँखा कान र नाकबाट मुख वा लिङ्गा गुदाबाट वा,
चिप्रा कानगुजी सिँघान कफ वा विष्टा र मूत्रादि वा ।
झर्दा बाहिर खूब मान्दछ घृणा चौपट्ट चोखो बनी,
के होला यस देह भित्र भनि यो सोच्तैन कैल्हे पनि ॥

बाटामा कहिँ हाडको छ टुकुरो सो देखिँदैमा पनि,
ढाढैबाट हटेर जान्छ डरले त्यो छोइएला भनी !
आफ्नै देह हजार हड्डिरहरूले हर्दम् छ ढाकीयको,
त्यो देख्तैन विचार छैन, किन हो यो बुद्धि लाटीयको ?

बिष्टा मूत्र गिदी र लादि रजले भित्री चकम्चूर छ,
गोडाको नङदेखि केश तक नै दुर्गन्ध भरपूर छ ।
घस्छन् बाहिर चन्दनादि अगरु कर्पूर वा अत्तर,
भिर्छन् कोट घडी छडी र पगडी बन्छन् सफा सुन्दर ॥

जो स्वभाविक दोष देहभरि छन् भित्रै तथा बाहिर,
ती साराकन राख्तछन् जतनले छोपेर चारैतिर ।
अस्वभाविक बाहिरी र नकली तानेर केही गुण,
ठूलो हूँ 'म' भनी गजक्क परने ती मूर्ख वा सज्जन ?

उब्ज्यो घाउ शरीरमा यहि कहीँ धोएन तीनै दिन,
स्याउँ स्याउँ किरा अनेक मसिना गिज्विज्ज ऊब्जन्छन ।
निस्केला उसबाट गन्ध सडिलो नाकै उजारी दिने,
यस्तो हाय कफलो देह कति हो यो लोकमा थामिने !

**॥ शरीरको क्षणिकता ॥**

अस्ती बीस तले ऊँचा महलका त्यो पुष्पशय्या महाँ,
नाना भोग मजा उडाइ सुतने त्यै देह हो लौ वहाँ !
ऐल्हे हेर उही शरीर छ चितामाथी सुतेको बरा,

आगो दन्दन दन्कियो डढिसके गोडा गली पाखुरा ॥

जो सिंहासनमा सुशोभित हुँदा देखेर सारा जन,
मान्थे हेरिरहुँ भनेसरि सधैँ आँखा नचिम्लिकन ।
ऐल्हे देह उही छ काल–बलले भैँमा पसारा हुँदा,
चिम्लन्छन् दुइ नेत्र हेर्न नसकी त्यै देहको दुर्दशा !

**॥ देह र जीवात्माको भेद ॥**

यस्तो नाश हुने महामलिन हा ! निःसारको देह यो,
नाना कर्म समाल्न सक्छ उसको सत्ता हुनाले अहो !
उस्ता सत्य अनन्त शुद्ध परमात्मालाई बिर्सीकन,
व्यर्थै नश्वर देहलाई 'म'–अहं, भन्दै भटारिन्छन ॥

**॥ देहमा ममता गर्नु व्यर्थ हो ॥**

आत्मा सत् अनि चित्स्वरूप र परं आनन्दरूपी कहाँ,
मासू हाड र रक्तले बनिएका यो देह मूढो कहाँ ?
यस्तो देह र जीवमा फरक जो जानेर शर्माउला,
त्यो ज्ञानी  किन देहमाथि 'म–अहं' को बुद्धि गर्ला भला !

**॥ यो शरीर के हो त ॥**

हिँजोको त्यै गोलो विषय-मलको जलजल हिलो,
विधाताको टेवा मिलि ठडिनगो देह झरिलो !
सुसारा के गर्नू ? किन दिन गुजार्नु ? पुतलि यो,
विधाताको नाता वहिँ टुटिगयो या ढलिगयो !!

## ॥ विषय- विचार ॥

### पत्नी

मिली भोली-भाली युवती कहिँ काली पनि भने,
नराम्री भै पत्नी भनी हृदयमा चोट रहने !
मिलीगै लौ राम्री चटकमटके नै पनि भने,
अरुले पो आफ्ना वश गरिलिनन् की डर हुने ॥

झरीली झडकीली हरिण-नयना चन्द्रवदना,
सरा राम्री नारी तिर नजर दिन्छन् जब जना !
कमारा भीकाराहरु र अरु ती दौँतर पनि,
रसीला लुब्धैला नजर गरि हेर्छन् अघि अनि ॥

उता उस्तै दिन्छन् पुरुष तरुणी तर्फ नजर,
यता उस्तै नारी पनि मन भटार्छन् वर-पर ।

निजी लोग्ने भन्दा तरुण बलियो सुन्दर नर,
मिलेमा गर्दा हुन्, कति कति मनैबाट रहर !

सुरुपा नारीका पतिहरु यिनै झञ्झट परी,
सधैँ दुब्लै हुन्छन्, मनमन कुढिन्छन् घरि-घरी !
अनेकौँ कौवाका झपट बिचको मासु टुकुरा,
लिएको कौवा झैँ सुख रति पनी छैन बिचरा !

बिढङ्गे गल्ड्याङ्ग्री जडमति हुनाले पनि कतै,
हुकूम् नाघी लागी अरुतिर भने जिद्दी बनिँदै !
त्यसैले भो शङ्का पर-पुरुषको क्यै गरि भने,
उही शत्रु भै गै सुख युवतिमा ख्वै र मिलने ?

**<u>पुत्र</u>**

रत्ती छैन अपुत्रको गति भनी जो वेदको बोलि हो,
पुत्रेष्टीहरु यज्ञ गर्न उसले उत्साह पो गर्दियो ।
लोकै छैन कुनै अपुत्रहरुको यो सम्झनू व्यर्थ छ,
हेरौँ लौ कुन लोक खातिर यहाँ भो पुत्र आवश्यक ?

दिन्छन् मुक्ति भनौँ भने जति छन् पुत्रवाला जन,

सारा मुक्त हुनन् त फेरि कसरी संसार होला भन ?
पुत्रैले यदि मुक्ति मिल्दछ भने टण्टा हजारौं किन,
पर्थ्यो गर्न अनात्म आत्म यिनको छुट्याउने साधन ॥

पाउन्नन् यही लोक पुध नहुँदा भन्छौ भने हेरन,
आए ती कसरी यहाँ जति जना ऐले अपुत्रा छन ।
औरै लोक छ पुत्रबाट मिलने भन्छौ भने यो भन,
नाना यज्ञ र तीर्थ होमहरू यी व्यर्थै बनीए किन ?

नाना तीर्थ भाकल व्रत गरी खर्चेर धेरै धन,
गर्छन् विह्वल भै मनो-वचनले सन्तानको चिन्तन ।
जन्मन्छन् जब पुत्र त्यै बखतमा माता-पितामा हरे,
रोगी हुन्छ कि नानि मर्छ कि भनी चिन्ता गहिरो परे ?

बाँचे तापनि शीलवान् र मतिमान् ज्ञानी भए ता निको,
के जान्नू तर बानि लिन्छ कि कतै नीचा र अज्ञानिको ।
भङ्जाहा पट-मूर्ख वा पतित वा क्रोधी छुचो हुन्छ वा,
चुक्लीखोर कि चोर जार अथवा जूवाडी भैजान्छ वा ॥

जन्मन्छन् कति पुत्र वा शिव हरे ! अत्यन्त नीचा पनि,

चाँडै बाबु मरोस र मालिक बनौं सम्पत्तिको मै भनी ।
आमा-बाबु र दाजु-भाइ सबको हत्या पनि गर्दछन्,
खेदै खेद छ पुत्रबाट शिव हा खेदै हुँदै मर्दछन् ॥

इच्छामाफिक शीलवान् र गुणवान् शूरा शिपालू भला,
जन्मन्छन् कहिँ कोहि औसर कसैका कोखमा साँचिला ।
यस्ता पुत्र पनी भए यहि कहीँ रोगी कि अल्पायु वा,
निःसन्तान भए भने पनि सधैँ खेदै हुने हो अहा !!

छोरोबाट छ सौख्य सत्गति भनी भन्नू कसोरी अब ?
निःसन्तान मनुष्य गै नरकमै पर्नन् कसोरी सब ?
तस्मात् तर्क वितर्क युक्तिहरुले विद्वान् जसो भन्दछन्,
उस्तै भक्ति सुकर्म साधि मतिमान् संसार पार तर्दछन् ॥

**नाता पक्ष**

पिता माता मामा दिदि बहिनी भाई र भतिजा,
फुपू सानीमा औ जति-जति छ नाता अरु निजा ।
बटूवा बाटामा मिलि छिन भरी एक सँगमा,
बसी छुट्टीमए झैं अलिक दिनका छन् जगतमा ॥

**इष्ट मित्र !**

विधाता भै दाता धन र जनले पूर्ण रहँदा,
सधैँ खन्खाँचामा मदत धनले गर्न सकिँदा ।
अनेकौँ जुट्नेछन् हित मित हुँदै भक्त बनिदै,
विपद्भाज सारा ती पर-पर हुनन् दुश्मन हुँदै ॥

दिनौँ खान्थे प्यूँथे घर पनि वसार्थे जब तक
हहाँ ज्यू ! ज्यू ! हो ! हो ! भनि-भनि झुमिन्थे तब तक ।
वसार्दामा एकै दुइ यति कतै छाक, बिरिनन्,
उतीमा ती निन्दा गरि-गरि रिसाएर घुमनन् !

**धन-दौलत**

सँधैँ भर्दा भर्दै पनि नभरिने पेट छ सँगै,
यसैका निम्तीमा धन बटुलने चित्त हुन गै !
कती डाँडा-काँढा वन र पहरा टापु कुदिने,
कतै कानू कौडी पनि नमिलदा हिस्स परिने !

मिलिजाला धेरै धन तपनि आराम लिन ता,
उनै पत्नी छोरा अरु अघि सरेकै छन यता ।
उता चोरी डाका सित र अधिकारीसित डर,

वृथै गर्छन् तस्मात् धनतिर पनी उद्यम नर ?

परुन् मुद्दा माम्ला विपद भनि ढुक्ने त कति छन्,
कतै नाघ्यो कानून कि भनि ढुँढेका कति हुनन् ?
खुडा खन्ती भाला भिरि-भिरि घुमेका त कति छन् ?
धनै भो भन्दैमा पनि सुख कहाँ के रछ र झन् ?

सुना, चाँदी, हीरा, मणि, र गहना, रत्न, रमणी,
विमान् म्याना, घोडा, रथ, गज र जहाज तरणी ।
निजा पार्दा अन्याय यदि कहिँ भै पाप ठहरे,
मजा ऐले थोरै छ, तर दुःख दुष्पार छ भरे ॥

**॥ राज्य लाभका सुख दुख ॥**
न घेरुन् बैरीले, मकन रणमा हार्नु नपरोस्,
यता सेना मन्त्री तनयतिर षड्यन्त्र नरहोस् ।
कुनै हत्याराका म तिर विष वा शस्त्र नपरुन्,
यिनै हर्दम् चिन्तार्णव बिच डुबेका नृपति छन् ॥

बैरीले छोप्तछन् वा कहिँ-कहिँ बिचमा हारे पो हुन्छ की वा,
आफ्नै भाई भतीजाहरु मिलिकन षड्यन्त्र पो रच्तछन् वा ?

खानेप्यूने कुरामा विष मिसि कि दिनन् शस्त्र पो छोड्‌दछन् वा ?
यस्तै शङ्‌का र सुर्ता छन यदि मनमा सोख खोजौँ कहाँ वा ?

**मनको दुर्गति**

तृष्णा लवस्तरि पिशाचिनिमा फँसेर,
यो चित्त आज छ पिशाच समाछ हेर !
हाँसतै छ, लाग्छ रुन्, फेरि दगुर्छ दूर,
कैले खुशी छ छिनमा रिसले छ चूर !

ऐले छ, शान्त तर दुष्ट बनिन्छ चट्ट ,
गर्दैछ गालि, छिनमै स्तुति गर्छ झट्टर ।
कैले अहारिस गरी रिसले भनेर,
आफैँ मपाई बनि पर्छ गजक्क हेर !!

यी क्रोध लोभ मद मत्सर मोह दम्भ,
यै चित्तकै वरिपरि सब भै झुरुम्म !
धेरै कुकूर जुटि मासु लुछे समान,
तान्छन् अनेक तिरबाट गरी हरान !

तस्मात् विचार गहिरो गर वार-वार,

वैराग्य तीव्र मनभित्र लगी घुसार ।
यो चित्तका पछि नलाग र टेर्न छोड,
यस्तै गरेर मनका सब वृत्ति तोड ॥

**विषय पन्साउने उपाय**

पानीका लहरी यिनै विषय हुन् संसार हो सागर,
नाऊ यै नर-देहको, छ यसमा जीवात्मा यात्राचर ।
अन्धाधुन्द बढेर कर्म हुरिले हुत्येर चारै तिर,
नाऊ ढल्पल्दिंदैछ जोर सितले बग्दैछ उल्टैतिर ॥

**॥ नाउ डुब्न आँट्यो ॥**

नौ छन् इन्द्रिय नाम छिद्र यसमा, माझी निजै जीव छ,
साह्रै अल्छि छ ती पुवाल नथुनी हरदम् खुलै राख्तछ ।
नौवोटै छिंडबाट पानि भरिन्दा नाऊ जसै डुब्दछ,
यै संसार-समुद्रका भुँवरिमा आत्मा उँधै झर्दछ ॥

**॥ नडुब्ने उपाय ॥**

थुन्नू इन्द्रिय छिद्र, ती विषयका थोपा हटुन् बाहिर,
नौका झट्ठ हलौँ भएर सजिलै तार्ने छ पारी तिर ।
सारा इन्द्रिय रोकि आफ्नु वशमा जो राख्छ सो तर्दछ,

दोस्रो छैन उपाय केहि कहि गै, यै मुख्य कर्तव्य छ ।

**॥ इन्द्रिय वश गर्ने उपाय ॥**

यौटै इन्द्रियका पनी वश परी प्राणी फसेकै छन,
सारा इन्द्रिय तृप्त गर्न सुरिने के पाउनन् उम्कन ?
माछा पर्दछ मासुको रस लिंदा मल्लाहका जालमा,
पर्दैछन् सुख-लोभले नरहरु त्यै कालमा नेलमा !!

आधा देह छ सर्पले निलियको त्यो भ्यागुतो तै पनी,
झींगा निल्दछ सासले खिंचि-खिंची आनन्द भोगौं भनी ।
तेस्तै मृत्यु छ सामुमा, तर पनी मानीस अन्धा सरी,
नाना भोग विलासकै विषयमा चुर्लुम्म छन् हर्घरी !!

आँखाले गर तीर्थको र हरिको सत्-शास्त्रको दर्शन,
फोस्रो चीज अनेक हेरिकन यी आँखा बिगार्छौं किन ?
हेर्नै मात्र छ, केहि काम उसले सप्रन्न है आखिर,
व्यर्थै पाप बटुलि के छ र सखे ! यो चित्त राख स्थिर ॥

चोखो भै सुन कानले हरि-कथा, निन्दा नसुन्ने गर,
चुक्लीखोर नपाल ! बात-उनको सुन्दै नसुन्ने गर ।

निन्दाले न त मर्छ शत्रु, न सखे ! क्यै लाभ आफ्नै हुने,
व्यर्थै हो किन काम दूषित गरौं पापिष्ट भै जाकिने ।

जिभ्राले पढ वेदशास्त्र र सधैँ नै बोल नारायण,
बोल्छौ व्यर्थ परापवाद र झुटो गाली र निन्दा कन ?
अर्काको यशले न हानि छ कतै, आफू न क्यै पाउला ?
जिभ्रो पारि अशुद्ध पाप बिरुवा रोपेर के खाउला ?

ऐले इन्द्रियका र यी विषयका संयोग वा भोगमा,
जो आनन्द रहन्छ सो क्षणिक हो सिद्धिन्छ तत्कालमा ।
त्यो संयोग छुटी वियोग हुनगै जो दुःख उब्जछन्,
ती जन्मैभरि छातिभित्र मुटुमा काँडा घुसारिन्छन ॥

गैह्रो राख विचार ! हेर यिनमा के छोड्ने ? के लिने ?
पक्का लाभ दिघो ठहर्छ कुनमा ? के हो सधैँ चाहिने ?
थोरै नै सुख छोडिदा हुँदि उता नाशिन्छ सारा दुख !
थोरै दुःख बरु सहेर मतिमान् लिन्छन् अनेकौं सुख !

**मन रोक्ने उपाय**

पानी भुलभुल उम्रँदैछ शिरमा बग्दोछ हर्दम् उँधै ?

हाली फाल समुद्र भित्र बिचमा डुब्यो नुनीलो हुँदै ?
त्यै पानी उहिँ जामिएर नबगे दोस्रो महासागर,
आफैँ नै बनिने थियो जगतमा मिल्थ्यो बडा आदर ॥

त्यस्तै यो मन बाहिरी विषयमा कैल्यै नडुब्दो छँदो,
भित्रै मात्र जमेर आदि विभुका लीला विचार्दो छँदो ।
रत्ती अन्त नताकि हिम्मत कसी बिर्सेर संसार यो,
बस्तो हो त अवश्य यो मन निजै आत्मा बनीने थियो ॥

जस्तै कूप नदी तलाउ छहरा छाँगाहरुको जल,
वर्षामा धमिलो रहन्छ, मिसिदा धेरै धमीला भल ।
फेरी ग्रीष्म हुँदा सुकेर भल ती बाँकी रहेको जल,
कस्तो हुन्छ पवित्र शीतल मिठो सग्लो भलो टलटल ॥

जस्तै यो मनमा यिनै विषयका दुर्वासना मिस्सिँदा,
हुन्छन् वृत्ति तमोगुणी, विरसिला पापी विषैला सदा ।
तातोस् खूब र वासना जब सुकुन् वैराग्यका तापले,
होला सत्वगुणी यही मन यहाँ खाली हुँदा पापले ॥

यो पाऊँ म भनी कुनै विषयमा राखेर इच्छा स्थिर,

ली बाह्येन्द्रियलाई साथि मन यो दौडन्छ चारैतिर ।
आफ्नू बात विहाप्रको नमिलदा-चिच्याउँदै धाउँछ,
आफ्नै सम्पति नाशिदासरि सदा अत्यन्त सुर्ताउँछ !!

अप्ठ्यारा पहरा, नदी, र छहरा, गाऊँ पुरी, जङ्गल,
नाघ्दै लडबडिँदै दगुर्छ मन यो हर्दम् हुँदै व्याकुल !
पाईएन भने भनेजति कुरा, पीएर साक्षत् विष,
माते झैँ गरि लाग्छ गर्न बबुरो झर्का र झन्का रिस ॥

तुम्बा खूब हलौँ हुँदा जतिसुकै पानी मनी बेसरी,
ठेले तापनि फेरि झट्टा उपरै उत्रन्छ जस्तै गरी !
उस्तै यो मन यत्नले जतिसुकै भित्रै धकेले पनि,
झट्टै  बाहिर निस्कि सो विषयमा घुस्रन्छ लुब्धो बनी ॥

ऐले वा अघि जन्ममा जति-जती राम्रा नराम्रा कि वा,
जो-जो कर्म मनुष्यले गरिसके जानी नजानी कि वा !
ऐले ती सब कर्मबाट मिलने जो योग हुन् आखिर,
खोजी क्यै नगरे पनी अघि-अघी हुन्छन् निजै हाजिर ॥

भेडो झैँ मन यो बो घिडघिडो भेडी धसान् मन्परी,

बाटो छोडि जताततै भिरतिरै जाकिन्छ धर-खर गरी ।
यो छाडा पशु रोकिँदैन सहजै मज्बूत मुङ्ग्रो बिना,
ब्रह्माले यस निम्ति नै रचिदिए वैराग्य भन्ने टुना ॥

यो टेढो मन घिडघिडो पशु सरी हदम् कुबाटातिर,
पञ्या खोलि दगुर्छ एक थलमा कैल्यै हुँदैन स्थिर ।
ब्रह्माले गल-काष्ठ बक्सनु भयो वैराग्य यै लायक,
झुण्ड्याउँ बलियो गरेर यसका झट्टु गलामा अब ॥

**॥ मुक्ति-सुखको नमूना ॥**

जो गैह्रो सुख पाइँदैछ दिनमा बेला यहाँ दिन्दिन,
यौटै इन्द्रिय छैन शामिल वहाँ त्यो चैन उब्जाउन ।
नाडी भित्र घुसेर चित्त लुकदा खुम्चे अरू इन्द्रिय,
यस्तै मुक्त हुँदा सधैँभरि वहाँ आनन्द मिल्ला प्रिय ॥

**॥ मनको थान्को ॥**

डर्लग्दो दरिलो बलिष्ठ खिरिलो स्वाधीन भै झोरमा,
घुम्ने निर्भय शूर बाघ थुनिँदा जञ्जीर वा खोरमा ।
निस्कन्छु भनि यत्न भर्सक गरी भेटेन दैलो भने,
सुस्केरा गरि थाकि-हारि उहिँनै हो आखिर घोत्लिने ॥

उस्तै यो मन-बाघले निकलने दैला नवै इन्द्रिय,
राखौँ टम्म थुनेर, निष्ठुर बनी, ताकौँ भरेको श्रिय !
लाखौँ यत्न गरेर छिर्न नसकी हारेर यो आखिर,
बन्ला निष्क्रिय शान्त-दांत, गतिलो, गम्भी धीर स्थिर ॥

**॥ संसार तर्ने मुख्य बाटा ॥**

रोक प्राण, समाधि बाँध अथवा सत्संग हर्दम् गर,
छोडी देउ कुवासना र हरिको सद्भधक्ति गर्ने गर !
बाटा छन् यति चार पार पुगिने पक्रेर यौटा कुनै,
लागौँ चढ्न अगाडि बढन, मन यो लाग्यो स्वयं थामिनै ॥

**॥ वैराग्य वा सन्तोष ॥**

पराया स्त्री, छोरा, धन, महल आफ्नै नजरमा,
बनिन्छन् नाशिन्छन् नखुसी छ न सुर्ता छ मनमा ।
छ अर्काको छोरो चतुर तपनी प्रेम नहुने,
छ आफ्नो ता लाटो तपनि किन हो प्रेम रहने ॥

मनैका हुन् लीला जहिँ-तहिँ मनैको छ ममता,

यसैले गर्दामा रहन नसकेको छ समता !
'म हूँ, मेरो हो यो' भनि यिनी अहम्ता र ममता,
मनैबाटै निस्कून् त कसरी ठहर्थ्यो विषमता !

गृहस्थी भै बस्ता पनि अधिक आसक्त नहुनु,
मुनाफा औ हानीतिर परि खुसी खिन्न नहुनु !
कतैको पाहुनू क्षण भरि टिकेको सरि हुनू,
प्रभूको हो खेला भनिकन उदासीन रहनू !

निजा डेरा बिर्सी सिरु र खरका जङ्गल हुँदो,
डढेला काँडामा दगुरि दगुरि व्याकुल छँदो ।
फसेको पाशामा मृगसरि हरे ! यो मन भयो,
सुगन्धी त्यो चीसो सरस फूल हावा र जलको ॥

सुखै खोज्दा खोज्दै फँसि विषयमा मारिन गयो !
नदीले, हावाले, सरस लहरा, झारहरुले ।
रमेका जङ्गलमा रुखमनि बसेको पुरुषले,
लिंदैछन् आनन्द श्रम गरि यही पुण्य फल हो !

अगाडी गङ्गा छन्, वरिपरि हरिया ति लहरा,
चराका ती गाना छर्-छर् झरेका ती छहरा ।
गुफामा श्रीनारायण चरणको चिन्तन गरी,
बसेका योगीले किन नलिनु आनन्द लहरी !

रसायन् सम्झी जो अमृत रस वैराग्य पिउनन्,
उजीयाला अन्तःकरण उनका निर्मल हुनन् ।
मिलेकामा सन्तोष गरिकन त जो निःस्पृह हुनन् !
उनैका साम्नेमा सकल सुख सामेल रहनन् ॥

हराएकी गौको जनमभरि सन्ताप रहने,
उनै गौ दान् गर्दा परम सुख सत्-पुण्य रहने !
जती छुट्तै जान्छन् विषय, उति छन् शोक पहरा,
निजै त्याग्दा ऐले सुख छ, पछि छन् पुण्य छहरा ॥

जस्तै द्रव्य हराउँदा विकल भै यो चित्त सुर्ताउँछ,
विद्वानलाई दिँदा उही धन सखे, आनन्द उब्जाउँछ ।

त्यस्तै स्त्री सुत आदिका विरहमा संकष्ट अत्यन्त छ,
आफैँ त्यागिदिंदा दुवैतिर भलो आनन्द औ स्वर्ग छ ॥

**॥ चित्त- शुद्धि ॥**

जैलेसम्म हुँदैन सत्व-गुणको उत्पत्ति यो चित्तमा,
जैलेसम्म रहन्छ लम्पट हुने स्त्री पुत्रमा वित्तमा ।
तैलेसम्म उदाउँदैन असली प्रज्ञानको वासना,
तस्मात् चित्त पखाल माझ मजले छुट्याउ दुर्वासना ॥

रिठ्ठा, खार, खरानि, पानीहरुले लूगा पखाले सरि,
माझ्नू पर्दछ चित्तलाई हरिका सद्भक्तिले बेसरी ।
श्री नारायण कृष्णका चरणमा भक्ति नलागे तक,
चित्त स्वच्छ हुँदैन सत्वगुणको मिल्दैन शान्ति सुख ॥

**॥ दृष्टान्त ॥**

आठै वर्ष उमेरमा ध्रुव पसे त्यो शून्य जङ्गलतिर,
झाडीभित्र पुगे बसे रुखमनि, बाँधे समाधि स्थिर ।
लागे ध्यान कठोर गर्न हरिको, खानै-पिनै छाड्दिए,

श्री नारायणमै लगेर मनका वृत्ती थुपारी दिए ॥

## ॥ श्रीकृष्णचन्द्रको भक्ति गर्ने विधि ॥

### ॥ चित्तको कर्त्तव्य ॥

वृन्दावनमा जङ्गल भारी,
फल फूल तरु तृण लहराधारी ।
कलै- लता मनि भक्त सह्यारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

न्याउल कोइलि शुक बक सारी,
अर्ना गज मृग केसरि भारी ।
कल्पतरुको रम्य छहारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

वरिपरि गोप र गोप-कुमारी,
भरि टपरी दही सारी सारी ।
खाँदै मिलीजुली हर्ष उमारी,

सम्झ बसेका कृष्ण मुरारी ॥

श्यामल वर्ण छ मेघ सरिको,
उहि छ प्रकाश सृष्टि-भरीको ।
चन्द्र-मुहार पिताम्बरधारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

कान सकुण्डल लोचन लामा,
कौस्तुभ-मणिको हार गलामा ।
कङ्कण भूषण चम्-चम् पारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

केशर, कर्पूर, चन्दन लाई,
वनभरि गम्म सुगन्ध चलाई ।
मुसु-मुसु हाँसी हँसिलो पारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

सुन्दर पैहीकन वन-माला,

पार्दै सबका मन उजियाला ।
कलिका काला मल पर सारी,
सम्झ बसेका कृष्ण मुरारी ॥

**॥ त्वगिन्द्रियका कर्तव्य ॥**

मन्द सुगन्ध बतास यहीँ छन्,
गङ्गा पद-तलबाट बहन्छिन् ।
प्रेमका सुन्दर कोमल पाऊ,
मिचिरहु रे त्वच ! अन्त नजाऊ ॥

**॥ नेत्रको कर्तव्य ॥**

अतिशय सुन्दर वाञ्छित दाता,
सुर नर दानव भाग्य-विधाता ।
प्रभुका चरण नछोडन आँखा !
नदगुर पर-पर पाखा पाखा ॥

**॥ कानका कर्तव्य ॥**

सुनिरहूँ जस्ता परम रसीला,

सुखमय पावन पुण्य भरीला।
कृष्ण-कथा सुन कानहरू हो !
अरु गफ गन्थन सुन्नु वृथा हो ॥

**<u>॥ दशै इन्द्रियहरू ॥</u>**

इन्द्रियहरू हो ! सुन यति अर्ति,
प्रभुकै पदतिर हौ सब भर्ती।
तिमी छौ सुखका परम पियारा,
प्रभू हुन् सुखका सागर खासा ॥

**<u>॥ अर्पण ॥</u>**

अयि मुरलीधर ! कृष्ण पियारे !
तिमी हौ जगका नाथ मुरारे !
प्रभुका पदको दर्शन पाऊँ,
यि दश इन्द्रिय भेटि चढाऊँ ॥

**आनन्दरामायणान्तर्गतए-**

**<u>विप्पल पारिजातको महिमा</u>**

**॥ श्रीरामचरित्र ॥**

लाखौँ चन्द्रसरी मनोहर-पुरी कैलाश दरबारमा ।
नाना रत्न सुवर्णका पलङ्गमा स्वामीजिका पासमा ॥
जौँला हात गरी अघिल्तिर सरी साम्ने मुहूडा धरी ।
लागिन् सोध्न ति पार्वती चरणमा पस्रेर विन्ती गरी ॥

हे शम्भो, करुणानिधान भगवन्, हे प्राणनाथ, प्रभो !
लीला राघवका ममा गरि दया धेरै सुनाउनु भो ॥
तृप्ती तैपनि हुन्न सुन्न मन झन् लाग्दैछ हे शङ्कर !
श्री सीतापतिका पवित्र गुणले कैले अघाइन्छ र ?

पारीजात र कल्पवृक्ष यि दुवै श्रीरामका पासमा ।
आए भूतलमा कसोरि ? कसले ल्याएछ के बातमा ?
प्यारा थे सुरराजका महलमा हर्दम् प्रयोजन् थियो ।
छाडेछन् किन इन्द्रले ? अब यही शङ्का मलाई रह्यो ॥

श्रीसीतापतिमाथि भक्ति धरि यो शङ्का गरीथिन् जब,
लाग्नूभो शिवजी बताउन कथा श्रीरामजीका अब ।

हे प्यारी ! सुन सावधान मनले श्रीरामजीका कथा,
यस्तो पुण्य पवित्र छल्पल हुँदा आनन्द मान्छु म ता ॥

दुर्वासा मुनि गर्छु दर्शन भनी श्रीरामको क्वै दिन ।
आफ्ना साठि हजार शिष्यसँग ती सोच्तै गए मन्मन ॥
'देखुन् पौरुष रामको जगतले, 'जानुन् यि नारायण ।
हुन्' भन्ने म निधै उपाय गरुँला यस्को उहाँ गैकन ॥'

यो सोची सब ठिक्क पारि मनले लागे अयोध्यातिर ।
देखे श्री अमरावती सरि पुरी आनन्द भो हरहर ॥
सारा लश्कर ली पसे नगरमा चल्थे बडा जोरले ।
'जै सीतापति राम राम' भनि ती जप्थे एकै सोरले ॥

पैर्हे का ति लगौँटि छाल रुखका, ती पाटका कन्धनी ।
झुण्डेका कटिमा मृगाजिन तथा माला गलामा पनि ।
भिक्षापात्र र पानिपात्र करमा, झोली बगलतर्फ झन्,
पाउमा ति खराउ, भस्म तनमा, श्रीराममा चित्त छन् ॥

गायत्री तपले र घोर तपले, आचारले, वेदले !
विद्या ज्ञान र ब्रह्मचर्य, गुरुको भक्ति र सत्सङ्गले ।
धप्-धप् अग्निसमान कान्ति मुखमा चम्कन्छ ब्रह्मत्वको,
उस्तो भेष छ शील तेज दुनियाँ देखेर छक पर्दथ्यो ॥

दुर्वासा अघिथे, कुमार पछि थे, 'जै राम ज' बोल्दथे,
बाटो घाट बजार ढाकि दरबारको मार्ग ली चल्दथे ।
'यस्ता पुण्य महर्षिको न नचुकी लौ-लौ गरौं दर्शन ।
भन्दै झ्याल अटालिबाट पुरमा हेर्थे करोडौं जन ॥

यस्तै खूब रमाइलो र भरिलो हेर्दै अयोध्यापुरी,
पुग्नूभो दरबारनेर मुनिजी श्रीराममा मन् धरी ।
ढोकामा पहरा सिपाही जति थे चाप्चुप भै हेर्दथे,
पस्नूभो दरबार भित्र मुनिजी क्वै केही बोल्दैनथे ॥

त्यो बेला रघुनाथ अन्तपुरमा सीताजीका साथमा,
हुन्थ्यो राज, विनोद-हास्यरसका बात्मारि एकान्तमा ।
चढ्दै सात तला उँभो मुनि पुगे, चेला सँगैमा थिए,

जै सीते ! भनि जानकी भवनको दैलो थुनी उब्भिए ॥

एकाएक यसोरि अन्तपुरमा त्यो साठि हज्जारको,
थुप्रो जङ्गलवासि विप्रगणको जम्मा हुँदा ता अहो !
दासी छक्क परे, सखी पर सरे, सिपाही घेरा परे,
सारा सीँढि अटालि, पालि यिनले खाली नराखी भरे ॥

मन्त्रीलाई थाहा भएछ दगुरे, छिर्दै अगाडी सरे,
दासी सामु परी र झट्टद करले ठाडै इशारा गरे ।
दासी धर्खरिँदै बुझेर दगुरी सीताजिका सामु गै,
लागी बोल्न डराउँदै थरथरी काम्दै र व्याकुल हुँदै ॥

हे सीते ! सुमते ! धरापति-सते ! हे राम सीतापते !
त्राहि, त्राहि ! लगौँटि-धारिहरूले दरबार घेरिसके !
फुर्तीला हुनलाई हो कि किन हो नाङ्गाभुतुङ्गा ति छन्,
चिन्ला कोहि भनेर हो कि किन हो फुस्रा बनेका ति छन् ॥

तेस्तै हुन् कि बनावटी स्वरुप हो, लट्टा  र दाही-जुँगा,

पाली, झोली कमण्डलू र मृगका छाला भिरेका छँदा ।
आए आठ तला चढेर कसरी ? बाहीर के-के गरे ?
रानीकै दरबारसम्म यिनले घेरेर सारा भरे ॥

दासीका यति बात सुन्नु जब भो  श्रीरामजी उठ्नुभो,
आएछन् तपसी कुनै मुनि भनी झट्टै उहीँ पुग्नु भो !
पाई दर्शन जानकी-रमणको सर्वस्व पाए भनी,
लागे आशिष भर्न मन्त्र विधिले गद्गवद् हुँदै ती मुनि ॥

नानाजन्म भरी बडो श्रम गरी जङ्गल गुफामा रही,
पानी घाम बतास भोक र तृषाको दुःख सारा सही ।
चौधै लोकभरी घुमे पनि कहीँ पाइन्न जो दर्शन,
उस्तो दर्शन पाउँदा किन नहोस् गद्गजद् मुनीको मन ॥

देख्तैमा रघुनाथले पनि तहीँ साष्टाङ्ग सत्स्वागत,
गर्नूभो अनि जानकी भवनमै लैजानु भो झट्पट ।
उच्चा आसनमा बसालि सुनको आह्री अघी सार्नुभो
पाउ पूजनुभो, सुगन्ध दिनुभो, माला चढाउनु भो ॥

पैल्हा खल्बलमै पुगे भरतजी, शत्रुघ्नजी, लक्ष्मण,
उर्मीला श्रुतकीर्ति माण्डविसितै आए बुहारी जन ।
आठै भाइ जुटे उहीँ सुतहरु मन्त्री ति सुमन्त्त थे,
साष्टाङ्ग प्रणती गरेर मुनिको आशीष ली बस्तथे ॥

यस्तो स्वागत भैसकेपछि बसी श्रीरामजी नम्र भै,
जम्ला हात गरेर बोलनु भयो अत्यन्त श्रद्धालु भै ।
हे सर्वज्ञ ! तपोनिधे ! हजुरको ठुलो दया भो ममा,
पाएँ दर्शन, पाप काटिन गए, तर्नें भएँ अन्तमा ॥

पूर्खादेखि लिएर आजतक जो सत्कर्म गर्दै रहे,
तीर्थस्नान र यज्ञ दान जप वा सत्पुण्य जे-जे भए ।
आजै ती सबको मिल्यो फल मुने, मेरो ठूलो भाग्य हो,
आज्ञा पाउँ गरीब लायक गुरो, सेवा गरौँ के प्रभो ?

बिन्ती राघवका सुनीसकि मुनी बोल्छन् बडा सोरले,
यौटा प्रश्न छ सुन्नुहोस् नरपते, उत्तर दिनोस होशले ।

'हज्जार वर्ष भरी ठुलो' व्रत गरेँ अन्नै नखाइकन,
आजै पारन हो परन्तु यसमा दोटा प्रतिज्ञा छन ॥

श्रीचिन्तामणि, कामधेनु र अनी आगो यतीबाट जो,
होला अन्न तयार खान्न म भनी पैलो प्रतिज्ञा छ यो ।
'ऐल्हेसम्म मनुष्यले कहिँ कतै देख्नै नपाईयको,
चोखो फूल चढाउँला म शिवमा' भन्ने त दोस्रो छ यो ॥

मेरा साठि हजार शिष्य इति हुन् अत्यन्त भोका छन,
गर्छौं आज हजूरकै भवनमा हामी सबै पारण ।
तेस्रो अन्न र फूल ठिक्क गर लौ गार्हस्थ्य पाल्ने भए !
एकै मात्र मुहूर्त बाँकि छ विदा पाऊँ, नसक्ने भए ॥

दुर्वासा मुनिको सुनी विकटका यस्ता कुरा रामजी !
भन्नू हुन्छ मुसुक्क हाँसि गरियो स्वीकार हे सिद्धजी !
सुन्नूभो जब यो कबोल मुनिले भन्नुभयो फेरि यो,
लौ भान्सा बनियोस नुहाउन सबै जान्छौं अबेला भयो ॥

ओर्ले साठि हजार विप्र सरयूको घाटमा जो उता,
लाग्यो खल्बल चल्न आपुसमहाँ रानीहरुको यता ।
के गर्ने अब लौ कसोरि यिनको सत्कार हामी गरौं ?
तेस्रो अन्न र फूल पाउनु कहाँ केको तयारी गरौं ?

यी चिन्तामणिले चिताय जतिको दिन्थे सबै भोजन,
दिन्छिन् फेरि यी कामधेनु सजिलै मागे जती भोजन ।
आगोमा कि त बन्नसक्तछ यता इच्छानुसार भोजन !
यी तीनैकन छाडि यो पृथिविमा पाइन्छ के भोजन ?

गर्नूभो बिचमा कबूल कसरी ? यस्तो महाराजले,
पृथ्वीमै नहुने कुरा कसरि पो दिन्थे र मानिसले ?
तीनै लोक त्रिकालदर्शि मुनिले जान्दैनथे यो किन ?
के भन्छन् ती भनी यसै पनि भनी हेरे हुनन् जिस्कन ।

जिस्केकै भय तापनी अब त के आफ्नै जवान् गैगयो,
आफ्नै बोलि समाल्नमा पनि करै लाग्यो अनर्थै भयो ।
एकै मात्र मुहूर्त बाँकि छ छिटो गर्नु भनेका पनि,

बीते पन्ध्र मिनेट आज अब लौ के हुन्छनी कोजनी ?

दुर्वासा रिसमा प्रसिद्ध ऋषि हुन् भोका उसैमाथि छन्,
दिन्छू खान भनेर फेरि नदिए आगै हुनेछन् ति झन् ?
के जान्नू कुलको र राज्य सबको नाशै हुने हो कि वा,
लाठा यी यमदूतका नरकमा हुन् बज्रने पो कि वा !

यस्तै तर्क वितर्कले घरभरी खल्बल मचेको थियो,
श्रीसीतापतिजी 'सभाभवनमा' गै राज भै बक्सियो ।
यो वृत्तान्त सुनी सदस्य हरु ती अत्यन्त नै आत्तिए,
'यस्तो पर्दछ गर्नु' भन्न नसकी तस्वीर झैं भै रहे ॥

हल्ला यो शहरैभरी पनि उता हावासरी फैलियो,
हाहाकार जतातते परिगयो सारा जगत् आत्तियो ।
तेजस्वी ऋषिका विषालु रिसको मान्थे सबैले डर,
आफ्ना कर्म समाल्छ ब्राह्मण भने के गर्न सक्तैन र ?

'बाबू लक्ष्मण, एक लेख चिठि लौ' भन्ने हुकुम् बक्सियो,

लेखीयो चिठी, बाँचियो र शरमा ठाडै उँभो छाडियो ।
उड्दोभो शर सो सरासर उँभो हावासरी हानियो,
तत्कालै सुरलोकमा पुगिवरी सन्सन् सभामै गयो ॥

त्यो बेला बहुतै सभा-भवनमा द्यौता र देवर्षि थे,
उच्चा आसनमा सुरेन्द्र बिचमा आनन्दमा मस्त थे ।
साम्नेमै सबका पुगी शर गिर्योआ, खत्रक्क भैँमा झर्यो ,
सारा छक्क परे, पछिल्तिर सरे, खल्बल गहीरो पर्यो ॥

'कस्को हो? किन हो? यहाँ कसरि यो आयो? कताबाट हो ?
भन्दै इन्द्र अघिसरी बुझि लिंदा राम राम पो देख्नुभो !
चिठ्ठीइ झट्ट फुकाइ ढोगि शिरले क्यै झस्किँदै खोल्नुभो,
सारा सिद्ध, महर्षि, देव-गणले सुन्ने गरी पढ्नुभो ॥

'स्वस्ति' श्री सुरराजका निकटमा मेरो नमस्कार छ,
झट्टै् यो चिठिका कुरा गरि पुरा थाम्नोस आफ्नू यश ।
दुर्वासा मुनि गर्छु पारन भनी मेरो यहाँ पाल्नुभो,
आगो, धेनु, मणी बिना बनियको खानेकुरा माग्नुभो ॥

जो देखेन मनुष्यले अझतलक त्यो फूल मागीकन,
थोरै म्याद धरी मुहूर्त भरिको जानू भयो न्वाहुन ।
पारीजात र कल्पवृक्ष यि दुबै झट्टै पठाइदिनोस्,
मेरो खूब छ सम्झना डर नली आनन्द ली बस्नुहोस् ॥

कस्तो के चिठिमा कुरा छ ? भनि ती सारा थिए थर्हर,
त्यत्तीमात्र कुरा सुनेर अब ता सप्र्यो सबै नुर ।
मन्त्री साथ गुरु पुरोहित ऋषी द्यौता सबै ती मिली,
लागे आउन रामका शरणमा साथै दुवै रत्न ली ॥

लागे झर्न विमान देवगणका सीधै अयोध्यातिर,
छेले घाम र छापिए सलह झैं आकाशमा भर्भर ।
ए क्या हो ! भनि झट् सगरतिर नजर फिर्के सबैका जब,
तारा भैंतिर पो झरे किन भने जस्तो बुझिन्थ्यो तब ॥

आए इन्द्र भनेर लक्ष्मण विमानैमा चढी जानु भो,
गर्दै स्वागत त्यै सभा-भवनमै ल्याएर ओराल्नु भो ।

राखे रत्न र रामका चरणमा ढोगे उता इन्द्रले,
आफ्नै आसनमा बसाउनु भयो प्रेमले यता रामले ॥

यै बेला मुनिले अह्वाइन गयो चेला उता तीरमा,
जा बाबू ! तँ छिटो चियाउन बुझेस् गै राम–दर्बारमा ।
के गर्छन् नृप छन् कहाँ र कसरी, चिन्ता छ वा हर्ष छ ?
हाम्रो तज्विज क्यै भएछ कि कतै पत्तै कि क्यै रैनछ !

आज्ञा यो गुरुको सुनी दगुरियो यौटा बटू च्याउन,
देख्यो इन्द्र–सभासरी कचहरी दोटा बुटा द्यौगण ।
चिन्ता द्वेष र डर अहारिस नथे कम्ती वहाँ क्यै नथे,
शान्ति प्रेम उदारता जहिँ तहीँ आनन्दमै मग्नथे ॥

चेलाले सब हेरि फर्कि गुरुका साम्ने सबै भन्दियो,
त्यो सुन्दा मुनिको अपार मनमा आनन्द पैदा भयो ।
स्नान–ध्यान–जप–क्रिया सकि मुनि चेलासमेत् फिर्नुभो,
बाटैमा लिन देवता सहित भै श्रीरामजी पुग्नुभो ॥

गर्दै स्वागत जानकी-महलमा सत्कारले लानुभो,
सीताजी सहितै भएर मुनिको पूजा बढी गर्नुभो ।
पारीजात पुजेर फूल बट्ुली सीताजीले अर्पण,
गर्नूभो मुनिले र बोलि शिवको गर्नुभयो पूजन ॥

पूजा गर्नुभयो र देवगणको श्रीरामजीले यता,
भान्साको तरखर छिटो गर भनी आज्ञादिनुभो उता ।
सीताले गहना र दिव्य कपडा पैर्हेभर फुर्ती गरिन्,
पूजिन् कल्पतरु र झट्ट सुनका भाँडा करोडौं धरिन् ॥

लागिन् प्रार्थना गर्न-हे सुरतरो ! हे देवताका धन !
दुर्वासा मुनिको र शिष्य सबको भर्नोस ऐले मन !
यत्ती भन्नु थियो कि भर्र ति सबै भाँडा भरीए यता,
चाँदीका पिरका र थाल सुनका राखे कचौरा उता ॥

ल्याईए सब देवता मुनिहरु लागेर लश्कर बसे,
छोरा आठ र तीन बाबुहरुले ओसार्न कम्मर कसे ।
सीताजी पनि फुर्तिले कुदि-कुदी लाग्नूभयो पस्कन,

उर्मीला श्रुतकीर्ति माण्डवि पनी थाले सबै पस्कन ॥

थाले थप्न उता बुहारिहरू ती सोहैवटी फुर्तिला,
कञ्जाक्षी, कमला, कलापति, चला, कञ्जानना चञ्चला ।
चम्पीका सुमती र मालति कुमुद्वन्ती अनी कालिका,
कञ्जांघ्री चपला र चन्द्रवदना चन्द्रानना नामका ॥

हज्जारौँ ति सखीहरू चटनि ली थप्तै दगुर्थे उता,
दासीहेरू घडा लिएर सुनका शर्बत् वसार्थे यता ।
लाखौँ मानिसको भतेर छ ठूलो, खाने मुनी देवता,
बाँडने राम-सीता तिनै जगतका दाता र माता-पिता ॥

दर्बारमा ऋषिका अघिल्तिर रही नौला अनौठा मिठा,
स्वादीला नुनिला पिरा र अमिला तीता र जात्-जातका ।
साम्ने ल्याइ गुरो ! लिनोस यनि भनी श्रीरामजी प्रार्थना,
गर्दै नम्र हुँदै थपीकन उता लाग्नुभयो ख्वाउन ॥

हज्जार वर्ष भरी नखाई रहँदा भोका परेका बरा,

नौलो मन्परि पैलि खान मिलदा आनन्द पाए पुरा ।
खाए ढुक्क परी हतार नगरी तन् मन् टनाटन् भरे,
फेरि वर्ष हजार गरौँ व्रत भने आँट्लान् कि जस्ता परे ॥

पूरा भोजन भैँसकेपछि उठे क्यै दासि–द्वारा चुठे,
द्यौता, सिद्ध, महर्षि, मानिस, मुनि एकत्र सारा जुटे ।
आफैँ रामजीले अपूर्व रसको ताम्बूल दीबक्सियो,
इच्छा माफिक दक्षिणा दिनुभयो सत्कार पूरा भयो ॥

साथमा मानिस देवता मुनि बसे श्रीरामदरबारमा,
इन्द्राणी–पति जानकी–पति दुबै बस्नू भयो माझमा ।
सीताजी बहिनी बुहारी सँग ली भित्रि तरफ बस्नुभो,
दुर्वासा स्तुति गर्न राम–विभुको गद्‌ग्द् हुँदै लाग्नुभो ॥
................

अये सीतानाथ ! त्रिभुवन विधाता ! रघुपते,
अये सर्वज्ञाता ! सुमति गति दाता ! नरपते ।
तपाईँ हौ नारायण जगतका कारण पिता,

प्रभुकै यो साक्षात् सकल जग हो खेल रमिता ॥

कुबाटामा जाला जगत डुबिजाला भनि विभो,
सुबाटामा लाने गति मति दिने वेद दिनुभो ।
सहारा वेदैका गरि सब अरु शास्त्र बनिए,
यिनैका सेवाले जगत उजियाला पनि भए ॥

छुचाका ढाँचाले जब-जब जगत् यो थिचिन गो,
अनेकौँ योनीमा तब-तब हरे ! जन्म लिनु भो ।
अघी यौटा शङ्खासुर खल उठी वेद-जलमा,
डुबायो त्यै बेला हजुर हुनुभो मत्स्य-कुलमा ॥

पछी फेरी द्यौता असुरहरुले सागर मथे,
मधानी थ्यो मन्द्राचल डुबिगयो दिक्क सब थे ।
बिचारा ती सारा सुर असुर साहै बिच परी,
मदत् माग्थे हर्दम् शरण हजुरैका परिपरी ॥

हजुरले त्यो बेला जनम कछुवाको लिनुभयो,

मधानीको आधार बनिकन त थामीलिनु भयो ।
मधानी थाम्नाले मन सफल भो देव-गणको,
वहाँ भो उत्पत्ति कति किसिमका रत्नहरुको ॥

**॥ चौध रत्न ॥**

मणी, लक्ष्मी, ऐरावत, अमृत, घोडा, अपसरा
अलक्ष्मी धन्वन्तरि पिष शशी धेनु मदिरा ।
यही पारीजात प्रियतम यही कल्पतरु भो,
यिनै चौधवटा जलनिधिजिले रत्न दिनु भो ॥

हजुरकै हो साँचै यदि भनुँ त ऐश्वर्य सब यो,
दयाले  त्यै बेला सुर असुरमा बाँडिदिनुभो ।
उँभो ब्रह्मादेखि तल भुसुनु वा झार तकको,
अघी नै ज्यू पाल्ने तजबिज गरी राखिदिनुभो ॥

नजरले देख्तैमा, जगत चकनाचूर बनिने,
हजूरको त्यो सामर्थ्य छ तर यहाँ को छ बुझने ?
म ता त्यो जान्दै छू तर अरु पनी जानुन भनी,

छिचोल्याई थापैँ निठुर निहुँखोजा पनि बनी ॥

पियारी सीताका सँग बसि मजाले पलँगमा,
रसीला हँसीला गरि, गरि कुरा एक रँगमा ।
रंगेका बेलामा छरपट ऊधुम् जो गरिदिएँ,
प्रभो ! पाऊँ माफी कसुर बिसुरैमा गरिलिएँ ॥

दुर्वासा ऋषिले यसै किसिमका नाना स्तुती गर्नुभो,
वीदा मागि निजा कुटीतिर सबै चेला लिई पाल्नुभो ।
श्रीसीतापति देवतासित यता बात्मार्न लाग्नूभो,
द्यौताहेरु बिदा हुँदा रुख दुवै जिम्मा गरी दीनुभो ॥

भन्नू हुन्छ गुरु वृहस्पति उठी हे राम ! भैँमा छँदा,
साथै रत्न रहुन् मिलुन् पछि उता बैकुंठयात्रा हुँदा ।
बिन्ती यो सुनि धन्यवाद दिनुभो पुष्पक् विमान्मा लगी,
राख्नूभो मणि धेनुकैसँग दुवै अनमोलका रत्न ती ॥

राजा इन्द्र र देवता पनि विदा भै जानुभो स्वर्गमा,

पारीजात र कल्पवृक्ष यति भै आए यसै लोकमा ।
जो यो पिप्पल हो उ कल्पतरुको सन्तान हो सम्झनु,
पारीजात पनि छँदै छ अहिले हर्दम् दुवै पूजनू ॥

पिप्पलको अनि पारीजात रुखको जो गर्दछ पूजन,
चीताए जतिको कुरा मिलि सुखी होला उनीको मन ।
त्रेता द्वापर सत्य तीन युगमा पूजा पूरा गर्दछन्,
गर्दैनन् कलिमा र भक्ति, बिचमा दारिद्र्यमा पर्दछन् ।

कही राम कथा अपार सब यो, शिवजीको मनराममै रह्यो,
गिरिजा पनि यो सुनी कथा, मननै गर्न भनी बसिन् यता ॥

जगन्नाथ सीतापतीको चरित्र,
सधैँ गर्दछन् पाठ जो भै पवित्र ।
जगत्माता ती नामी धनीमानि बन्लान्,
पछी फेरि संसारका पारि तर्लान् ॥

## ॥ पापबाट जोगिने मन्त्र ॥

कृष्ण ! त्वदीय पद-पङ्कज-पञ्जरान्ते,
अद्यैव मे विशतु मानस-राजहंसः
प्राण प्रयाण समये कफ-वात-पित्तै,
कंठावरोधन-विधौ स्मरणं कुतस्ते ॥

**॥ सुत्ता भन्ने मन्त्र ॥**

जले रक्षतु वाराहः स्थले रक्षतु वामनः ।
अटव्यां नारसिंहश्च सर्वतः पातु केशवः ॥
जले रक्षतु नन्दीशः स्थले रक्षतु भैरवः ।
अटव्यां वीरभद्रश्च सर्वतः पातु शङ्कर ॥
अर्जुन फाल्गुनो जिष्णुः किरीटी श्वेतवाहनः ।
वीभत्सुर्विजयः कृष्णः सव्यसाची धनञ्जय ॥

**॥ चोर नलाग्ने मन्त्र ॥**

तिस्रो भार्याः कफल्लस्य मोहिनी, दाहिनी सतीः ।
तासां स्मरण मात्रेण चौरो गच्छति निष्फलः ॥

**॥ सर्पले नडस्ने मन्त्र ॥**

नर्मदायै नमः प्रातर्मदायै नमो निशि ।
नोऽस्तु नर्मदे तुभ्यं त्राहि मां विष सर्पतः ॥

## अष्टोत्तरशतः नामावलिः

(यो स्तोत्र सधैँ पाठ गर्नाले नरकको दुःख भोग्नु पर्दैन ।)

गोविन्द माधव मुकुन्द हरे मुरारे ।
शम्भो शिवेश शशिशेखर शूलपाणे ।

दामोदराच्युत जनार्दन वासुदेव ।
त्याज्या भटाय इति सन्ततमामनन्ति ध्रु० ॥

गङ्गाधरान्धकरिपो हर नीलकंठ ।
बैकुंठ कैटभरिपो कमठाब्जपाणे ।

भूतेश खण्डपरशो मृड चण्डिकेश, (त्याज्या०)
विष्णो नृसिंह मधुसूदन चक्रपाणे ।

गौरी गिरीश शङ्कर चन्द्रचुड ।
नारायण सुर निवर्हण शाङ्गर्पाणे, (त्याज्या०)

मृत्युञ्जयोग्रविषमेक्षण कामशत्रो ।
श्रीकान्त पीतवसनाम्बुजनील शौरे ।

ईशान कृत्तिवसन त्रिदेशैकनाथ, (त्याज्या०)
लक्ष्मीपते मधुरिपो पुरुषोत्तमाद्य ।

श्रीकंठ दिग्बसन शान्त पिनाकपाणे ।
आनन्द कन्द धरणीधर पद्मनाथ (त्याज्या०)

सर्वेश्वर त्रिपुर सूदन देवदेव ।
ब्रह्मण्यदेव गरुडध्वजः शङ्खपाणे ।

त्र्यक्षोरगाभरण बालमृगांकमौले, (त्याज्या०)
श्रीराम राघव रामेश्वर रावणारे ।

भुतेश मन्मथरिपो प्रमथाधिनाथ ।
चाणुरमर्दन हृषीकपते मुरारे (त्याज्या०)

शूलिन् गिरीश रजनीश कलावतंस ।
कंशप्रणाशन सनातन केशिनाश ।

भर्ग त्रिनेत्र भवभूतपरे मुरारे, (त्याज्या०)
गोपीपते यदुपते वसुदेवसूनो ।

कर्पूरगौर वृषभध्वजः भालनेत्र ।
गोवर्द्धनोधरण धर्मधुरीण गोप, (त्याज्या०)

स्थाणो त्रिलोचन पिनाकधर स्मरारे ।
कृष्णानिरुद्ध कलाकर कल्मषारे ।

विश्वेश्वर त्रिपथगार्द्र जटाकलाप, (त्याज्या०)
अष्टोत्तराधिकशतेन सुचारुनाम्नां ।

सन्दर्भितां ललितरत्न–कदम्बकेन ।
सन्ना मां द्दढगुणां द्विज जगंठौ यः ।

कुर्यादिमां स्रजमहो ! स यमं न पश्येत् ।
इत्थं द्विजेन्द्र ! निजभृत्यगणान्सदेव ।

शशिक्षयेदवनिगान् स हि धर्मराजः
अन्यऽपि ये हरहराङ्कन्धरा धरायाम्,
ते दूरतः पुनरहो ! परिवर्जनीया ॥

-------------- इति --------------------

लेखक परिचय:

ताप्लेजुङको हाङदेवामा रविलाल शर्माका छोराका रुपमा जन्मेका जगन्नाथ उपाध्याय गुरागाञी (बि.सं. १९५९-२०२२) युगद्रष्टा हुन् । सानैदेखि यिनमा ज्ञानको असीम तिर्खा थियो । त्यही तिर्खा मेटाउन पितालाई थाहै नदिई ताप्लेजुङकै फुरुम्बुको गोठ रुङ्न छाडेर साथी हरिनारायण पोखरेलसँग उनी बनारस पुगे । अध्ययनलाई निरन्तरता दिँदै पण्डित बने ।

विद्यार्थीकालमा पाएको दुःख सम्झेर उनले बनारसमा नेपाली छात्रावासको योजना बनाए । त्यही उद्देश्य पूर्तिका लागि वि.सं. १९९६ मा 'नम्र निवेदन' नामक कृति लेखे । अर्को वर्ष वि.सं. १९९७ मा 'गुणरत्नमाला' लेखे । यी दुवै कृति बोकेर उनी नेपालीभाषीहरुको बाक्लो बस्ती भएका पश्चिम-बङ्गाल, असम, बर्मा डुले । त्यसपश्चात् उनका कृतिभित्रका 'सिलोक' जन-जनका जिब्रोमा झुन्डिन पुगे ।

शुभेच्छुकहरुले दिएको रकम जम्मा गरेर उनले बनारसको मणिकर्णिकाघाटमा नेपाली छात्रावास बनाए । नेपालकी जगदम्बा महारानीसँग मिले नेपाली धर्मशाला पनि बनाए । देहान्तपछि उक्त धर्मशाला परिसरमा उनको सालिक पनि राखिएको छ।

जेठी पत्नीको अकाल मृत्युपछि उनले दोस्रो विवाह गरेका थिए । उनका पाँच छोरी र एक छोरा रहेका छन् ।

(मञ्जरी प्रकाशनबाट प्रकाशित 'गुणरत्नमाला-२०७३' बाट साभार)